जन आस्था साप्ताहिक

JANA AASTHA National Weekly

www.janaaastha.com

वर्ष २९, अंक ३१, २०८० साल असोज १७ गते बुधबार, नेपाल संबत् ११४३, October 4, 2023

# उता मुद्दा, यता शीतलनिवास नपुग्दै मृत्यु

राष्ट्रपति कार्यालयलाई विश्वासको खाँचो थियो, अख्तियारलाई पशुपतिनाथको जलहरि घोटाला प्रकरणमा निस्वार्थ अनुसन्धानको ! दुबैका लागि एउटा राष्ट्रसेवक कर्मचारी दत्तचित्त भई काममा थियो । तर, जिन्दगीका अनगिन्ती जिम्मेवारीलाई असरल्ल छाडेर कोही आर्यघाटमा खरानी बनेर उड्यो, सधैं-सधैंलाई !

नेपाल सरकारका सहसचिव शेरजंग कार्की यस्तै वियोगका कथासँगै अस्ताए । गत शुक्रबार (असोज १२ गते) बिहान नर्भिक अस्पतालले मृत्यु प्रमाणित गर्नुअघि बिहीबार राति घरमा एक्लै सुतेका थिए । अख्तियारको अनुसन्धान अधिकृतका रूपमा पशुपतिनाथमा जडान गरिएको जलहरि अनियमितताबारे उनैले छानवीन गरी प्रतिवेदन बुझाएका हुन् । संयोग कस्तो भयो भने, उनकै अनुसन्धानका आधारमा बिहीबार दिउँसो नै अख्तियारले पूर्वसदस्य सचिव डा.प्रदीपकुमार ढकाल, वर्तमान सदस्य सचिव डा.मिलनकुमार थापा र स्टोरकिपर अरुणकुमार श्रेष्ठलाई एक करोड १७ लाख एक हजार सात सय ८१ रूपैयाँ ८५ पैसा भ्रष्टाचार गरेको भन्दै मुद्दा बुझाएकै दिन शेरजंगको जीवनको अन्तिम दिन बन्न पुग्यो ।

अख्तियारको 'अपजसे' जागिर राष्ट्रपति कार्यालयको ताकेताका कारण त्यता सरेकोमात्रै थियो । वर्तमान राष्ट्रपति रामचन्द्र पौडेल बहाल हुनासाथ उहाँले प्रमाणित गर्नुभएको नागरिकता विधेयकलाई कार्यालयभित्रैका कर्मचारीले विवादित बनाएका थिए । पूर्वराष्ट्रपति विद्या भण्डारीले प्रमाणित नगर्नुभएको कागजमै, उहाँको नामको मुन्तिर आफ्नो नाम लेखाई नयाँ राष्ट्रपतिले उक्त विधेयक प्रमाणित गर्नुभएको भनी चर्चा भयो । त्यस्तो गोपनीयता बाहिर आउनुको कारण थियो, त्यहाँस्थित कानुन महाशाखाको लापरवाही वा सूचनाको चुहावट । त्यहाँ एमाले पृष्ठभूमिका वरिष्ठ अधिवक्ता टीकाराम भट्टराईकी पत्नी एवं कानुनतर्फकी सहसचिव इन्दिरा दाहाल थिइन् । उनी वा उनको बाँकी ८ पेजमा

*यसरी मुद्दा नचलाउने हो भने हामीलाई व्यक्तिगत रुपमा सहयोग गर्नुपर्ने भन्दै अख्तियारका कर्मचारीले बार्गेनिङ गर्ने गरेकोमा कोषका कर्मचारीहरूले बेवास्ता गरेपछि मुद्दा चलाउने तयारी भएको हामीले बुझेका छौं । राज्यले मलाई दण्ड दिने कार्य गऱ्यो भने, न्याय पाइन भने र यसै कारण अन्य विषयमा समेत बदलाको भावनाले फसाइयो भने पशुपतिनाथकै मन्दिरभित्र मेरो प्राण त्याग्ने विकल्प छैन । मलाई कारवाही गरेमा प्राण त्याग्न बाध्य बनाउनेहरूको नाम सार्वजनिक गर्नेछु ।*

# मदन भण्डारीको मर्ममाथि निर्मम मारसुंग्री

**विश्वभर कम्युनिष्ट आन्दोलन रक्षात्मक अवस्थामा पुगेका बेला जनताको बहुदलीय जनवाद (जबज)को कार्यनीति प्रतिपादन गरेर नेपाली कम्युनिष्ट आन्दोलनलाई लोकतान्त्रिकरणको बाटोमा अघि बढाउन मदन भण्डारीको योगदान अतुलनीय रह्यो । आज नेकपा एमाले हैसियतसाथ राष्ट्रिय राजनीतिमा जबर्जस्त उभिएको छ, त्यसको जग मदनको जबज नै हो । मूलधारको कम्युनिष्ट आन्दोलन नै मदनको पथमा हिंडिरहँदा एमाले नेतृत्व नि:शर्त जबजको पक्षमा उभिनुपर्ने हो ।**

मदन भण्डारी आफैंले ०४९ सालमा झलनाथ, मोहनचन्द्र र सिपीसँगै महासचिवमा प्रतिस्पर्धा गर्नुभएको थियो । तर, ३० वर्षपछिको पछिल्ला घटनाक्रमले भने एमाले अध्यक्ष केपी शर्मा ओली आन्तरिक प्रतिष्पर्धाबाट नेता छान्ने जबजको मर्ममाथि प्रहार गर्न उद्यत रहेको देखिन्छ । ९ औं महाधिवेशनमा अध्यक्ष चुनिनुअघिसम्म पार्टीमा स्थायी प्रतिपक्षी जस्तै रहेका ओली आफूलाई मदनको उत्तराधिकारी दावी गर्नुहुन्छ । एमालेमा आन्तरिक प्रतिस्पर्धाबाट नेतृत्व चयनको वकालत गर्ने पनि उहाँ नै हो । तर, जब उहाँ पार्टी र सत्तामा पुग्नुभयो, आन्तरिक लोकतन्त्र निमोठिने क्रम त्यहींबाट शुरु भयो । खासगरी सौराहामा भएको दशौं महाधिवेशनबाट एमालेमा आन्तरिक लोकतन्त्रको चिरहरण गर्ने अभ्यास शुरु भएको हो । जसलाई एमालेमै रहँदा घनश्याम भुसालले 'सौराह काण्ड' को संज्ञा दिएका थिए ।

सौराहामा ओलीको चाहना थियो, सर्वसम्मत अध्यक्ष हुने । त्यसका लागि उहाँले म्याद सारीसारी खल्तीको नाम अनुमोदन गराउन भरमग्दुर प्रयास पनि गर्नुभयो । तर, भीम रावलले चुनौती दिएपछि अन्तिम घडीमा प्रतिष्पर्धा खुला गर्न बाध्य हुनुभयो । अरु पदाधिकारी पनि आफूले भनेबमोजिम नै आउने गरी नामलिष्ट तयार पारिएको थियो । तथापि घनश्याम भुसाल र भीम आचार्य तगारो बनेपछि त्यो पनि सम्भव भएन । यतिबेला एमाले प्रदेश अधिवेशनमा छ । सुदूरपश्चिम र मधेसबाहेकका सबैतिर अधिवेशन सम्पन्न भैसकेका छन् । तर, सौराहामा जस्तै प्रदेशमा पनि आफूले चाहेको व्यक्तिलाई टीका लगाएर अधिवेशन सम्पन्न भएको घोषणा गर्ने ओलीको प्रयास पूर्णत: असफल भएको छ । चुनाव नगर्न ओलीले दिएको कडा निर्देशन प्रदेशका नेताहरूले अवज्ञा गरेका छन् । अधिवेशन सम्पन्न भएका लुम्बिनी, बाग्मती, कोशी र कर्णालीमा चुनावबाटै नेतृत्व आएको छ ।

मूल नेतृत्वले नियन्त्रित लोकतन्त्रको अभ्यास गर्न खोजे पनि तलका कार्यकर्ता भने जबजले स्थापित गरेको लोकतान्त्रिक संस्कारमा प्रतिवद्ध रहेको सन्देश प्रदेश अधिवेशनले दिएको ठान्छन् एमाले नेताहरू । 'पञ्चायतमा राष्ट्रिय पञ्चायतको सदस्य उठ्न पहिला राजाबाट स्वीकृति लिनुपर्थ्यो । अहिले हाम्रो पार्टीमा पनि अध्यक्षको अनुमति नलिई प्रतिष्पर्धा गर्न नपाइने अभ्यास शुरु गर्न खोजिएको छ', एक पदाधिकारी तहका नेताले भने, 'त्यो त राजाभन्दा पनि निरंकुश चरित्र भयो, वास्तवमा जबजवादीले यस्तो गर्न सक्दैन ।' जबजले प्रतिष्पर्धाबाट नेतृत्व निर्माण गर्न र आन्तरिक लोकतन्त्र बलियो बनाउन मार्गदर्शन गरे पनि अध्यक्ष ओलीका व्यवहार त्यसअनुकूल नरहेको एमाले नेताहरूको गुनासो छ । 'सौराहा महाधिवेशनमा यो-यो मान्छे उठ्न पाउँछ भनेर तोक्ने अनि भनिएका मान्छेले मात्रै बाँकी ७ पेजमा

## माओवादीमा बिआरआई रोक्न जसले कसे मोर्चाबन्दी

*पार्टीको बैठकमा प्रधानमन्त्री प्रचण्डले भन्नुभयो, 'बिआरआई रोक्न म्यासिभ प्रेसर छ तर कुनै पनि हालतमा पछि हट्ने कुरा हुँदैन ।' उतैबाट चीन जाने कार्यतालिकासहित अमेरिका निस्कनु केही दिनअघि भ्रमणबारे पार्टीलाई जानकारी दिन बसेको पदाधिकारी बैठकमा नेताहरूले बिआरआईबारे चासो राखेपछि उहाँको यस्तो भनाई आएको हो । कांग्रेसमार्फत शक्ति केन्द्रहरूले दिइरहेको दबाबबारे थप व्याख्या गर्दै प्रचण्डले भन्नुभयो, 'कुनै पनि देशको सुरक्षा छाताभित्र नजाने हाम्रो परराष्ट्र नीतिलाई केन्द्रमा राखेर चीनसँग सम्झौता हुन्छ, त्यसबाट दायाँबायाँ हुने कुरै छैन ।'*

*बिआरआई परियोजना अघि बढाउन ढुक्क देखिनुभएका प्रधानमन्त्रीलाई अधिकांश नेताले पनि सोहीअनुसार सुझाव दिए । कांग्रेसलाई विश्वासमा लिँदै आफ्ना न्यूनतम मान्यतामा अडिग रहेर चीनसँग सम्बन्ध सुधार गर्नुपर्ने मत राखेका बहुमत पदाधिकारीले सरकार जोगाउनकै लागि अनावश्यक शर्तको भारी नबोक्न पनि सुझाए । बैठकले त्यही म्याण्डेट दिएर भ्रमण सफलताको शुभकामनासहित बिदा गऱ्यो । तर, माओवादी बैठकमा बिआरआईको विपक्षमा समेत केही नेताले चर्को मत राखेको पाइएको छ । त्यस्तो धारणा राख्ने नेता हुन्, 'सदावहार मन्त्री' शक्तिबहादुर बस्नेत । ऊर्जामन्त्रीसमेत रहेका उनी बिआरआईकै कारण कांग्रेससँग असमझदारी बढाएर जान नहुने प्रष्ट लाइनमा उभिएका थिए । बैठक स्रोतले बस्नेतको तर्क सुनाउँदै भन्यो -* बाँकी ८ पेजमा

## कमरेडहरूले यतिसम्म गरेछन् कित्ताकाट

न आफूसँग, न आफ्नासँग- पार्टीभित्र कसैले प्रतिस्पर्धाका नाममा आँखा नलगाओस् भन्ने चाहनुहुन्थ्यो, केपी ओली । तर, पछिल्लो समय विभिन्न प्रदेश अधिवेशनका क्रममा त्यस्तो भएन ।

एमालेमा विकास भइरहेको नयाँ शक्ति संघर्षभित्र ओलीले आफ्नो स्वीकार्यता कायम राख्न सक्नुभएन । फलत: प्रदेश-प्रदेशमा प्यानलसहित उहाँका आधिकारिक उम्मेदवारविरुद्ध अलग्गै मोर्चा बन्न थाले । सौराहामै भीम रावलको चुनौतीका कारण आफैं निर्विरोध बन्न नपाउनुभएका ओलीका उम्मेदवारले भइसकेका अधिवेशनमध्ये कहीँ पनि सर्वसम्मत पदाधिकारी निर्वाचित नहुँदा पराजय व्यहोर्नुपरेको छ । लुम्बिनी र कर्णालीमा उहाँ पक्षीय अध्यक्षले जितेनन् । बागमती र कोशीमा अध्यक्ष त उहाँकैले जिते, तर अन्यले पदाधिकारीमा हारेका छन् । बागमतीमा ओलीले तयार पार्नुभएका कैलाश ढुंगेलविरुद्ध गोकुल बाँस्कोटाहरूले मकवानपुरबाट कृष्णप्रसाद दाहाललाई उठाए । २ सय ६७ भोटले जीतहार हुँदा ओलीको निर्देशनविपरित ४ सय २९ जनाले दाहाललाई मतदान गरेका छन् । जबकि, एकमुष्ट परिणाम हात पार्न उम्मेदवारलाई खाली कागजमा सही गराउने, गोप्य सूची बाँड्ने, एउटाले भोट हाल्न जाँदा निगरानीका लागि अर्कोलाई सँगै पठाउनेजस्ता रणनीति अपनाइँदा पनि बाँकी ८ पेजमा

## सेनाका सेकेण्डम्यानको जागिर सकिँदै

भावी प्रधान सेनापति बन्न जर्नेलहरूबीच तीव्र प्रतिस्पर्धा शुरु भएको छ । लाइनमा रहेका ३ तारे र दुई तारे जर्नेलहरू विभिन्न कारणले गर्दा घर जान लागेसँगै यस्तो प्रतिस्पर्धा देखिएको हो ।

प्रभुराम शर्मा ०८१ भदौमा अवकाश हुँदैछन् भने उनीपछि रहेका सरोजप्रताप राणा पनि १ वर्ष म्याद थप्नै नपाई अर्को हप्तादेखि बिदामा बस्दैछन् । राणापछिका सीताराम खड्कासमेत छिट्टै घर जान लागेकाले ताराध्वज पाण्डे र अशोक सिग्देलबीच प्रतिस्पर्धा हुँदैछ । राणा अवकाश भएको १३ दिनभित्र यसबारे निर्णय भएन भने मेजर जर्नेलमै ताराध्वज पनि घर जानेछन् । दसैं, तिहारलगायतका बिदाको कारण क्याबिनेट बैठक बस्न कठिन हुने र यसैका लागि बैठक बस्न पनि सक्ने नसक्ने कुराले भावी सेनापतिको लाइन क्लियर गर्नेछ ।

माओवादीबाट नेपाली सेनामा सामेल भई विवादास्पद रूपमा विशेष पद सिर्जनामार्फत तीन वर्षे पदावधि थपिएका यम अधिकारीको कारण २५ बेसिकका २ जना, २६ बेसिकका सात जना तथा २७ र २८ बेसिकका दर्जनौं काविल अफिसरहरू उमेरको हद छँदै घर जान बाध्य भएका छन् । यसबीच बिदाका निहुँमा इलाम जिल्लास्थित गणका प्रमुख र उनका ट्वाइसी मेजरबीच कुटाकुट भएको छ । कुटाकुटपछि मेजरले यही ८ गतेका दिन घर बिदा पाएको स्रोतको दाबी छ । मेजरले घरमा आमा र परिवार बिरामी भएको भन्दै बिदा बाँकी ८ पेजमा

## सरकारबाट मन्त्री फर्काउन किन सरगर्मी ?

प्रचण्ड नेतृत्वको वर्तमान सरकार रहनु वा आलोपालोमा फेरि शेरबहादुरले नै सरकार चलाउनुभन्दा एमालेसँग सहकार्यको हात फैलाउनुलाई कांग्रेसका एकथरि नेताले 'उचित' मान्न थालेका छन् ।

महामन्त्री गगन थापाले 'आफ्ना मन्त्रीहरू फिर्ता बोलाएर सरकारमा समाजवादी मोर्चालाई छाडेर जाऔं' भन्नुको अर्थ विस्तारै 'एमालेसँग मिलौं' भन्न खोजेको रूपमा कांग्रेसका नेताहरूले अर्थ लगाएका छन् । यसअघि सरकार, पार्टीका विभागसहितका विभिन्न भागबण्डामा गगन पक्षलाई शून्य पारिएपछि उनी आक्रोशित भएका हुन् । 'महामन्त्री समूह' भनी चिनिने गगन र विश्वप्रकाश शर्माहरूले संघीय मन्त्रीका रूपमा प्रदीप पौडेल, प्रदेश मन्त्रीका रूपमा श्रीराम लामिछानेहरूको नाम सिफारिस गरे । तर, सभापति देउवाले ती कुरा सुनेको नसुन्यै गरेपछि गगनले भावी प्रधानमन्त्रीका रूपमा आफ्नो नाम दावी गरेका छन् । यही कुराले शेखर कोइराला समूहसँग पनि उनलाई टाढा पारेको बताइन्छ । देउवाले पहिला गगनलाई बोकेर शेखर समूहलाई टाढा पार्नुभयो । अहिले शेखरहरूसँग भित्री सहकार्य गर्दै गगनहरूको बेवास्ता गरिरहनुभएको कांग्रेस नेताहरूको भनाइ छ । गगनहरूद्वारा प्रदेशमा मन्त्री बनाउन सिफारिस गरिएका श्रीराम काठमाडौंस्थित गगनकै निर्वाचन क्षेत्र नं. ४ (क) का प्रदेशसभा सदस्य बाँकी ८ पेजमा

## दक्षिणदेखि अमेरिकासम्मै उपेन्द्रको दौडाहा

राजनीति गर्नेहरूका दु:ख पनि कम्ता छैनन् । एकातिर राष्ट्रिय राजनीतिको समीकरण मिलाएर सत्तामा पुग्नुपर्ने चुनौती, अर्कोतिर शक्ति केन्द्रहरूको विश्वास जोगाउन पापड बेल्नुपर्ने बाध्यता । घरेलु र बाह्य राजनीतिबीच तालमेल मिलाउन नसके राजनीतिबाटै किनारामा पर्ने खतरा । यस्तै खतराको दोसाँधमा उभिएका पात्र हुन्, जनता समाजवादी पार्टी (जसपा)का अध्यक्ष उपेन्द्र यादव ।

वामपन्थी पृष्ठभूमिका उपेन्द्र राजनीतिमा उदाएको धेरै भएको छैन । २०६४ सालको पहिलो संविधानसभा निर्वाचनपछि एकाएक राष्ट्रिय राजनीतिमा शक्तिशाली बनेर आएका उनी त्यसयता निरन्तर कुर्सीमा छन् । तर, पार्टी भने क्रमश: ओरालो यात्रामा छ । कुनै पनि पार्टी सानो र ठूलो हुनु मूलत: आन्तरिक राजनीतिकै उपज हुन्छ । तर, नेपाल जुन भूराजनीतिक अवस्थामा छ, त्यसले पार्ने प्रभावबाट पार्टीहरू पूर्णत: मुक्त हुने स्थिति छैन । त्यसैको चपेटामा परेका हुन्, उपेन्द्र पनि । भनिन्छ, कम्युनिष्ट राजनीति छाडेर क्षेत्रीय राजनीतिमा पाइला टेकेको झण्डै दुई दशक हुनलाग्दा समेत उपेन्द्र र उनको पार्टीमाथि दक्षिण र पश्चिमले पूरापूर भरोशा गरेको छैन । यसको स्वीकारोक्ति स्वयं उपेन्द्रले पनि गर्न थालेको जसपाकै नेताहरू बताउँछन् । सिके राउतसँग चुनाव हारेपछि क्रमश: असुरक्षित महसुस गर्न थालेका उनी अब भने दक्षिण र पश्चिम बाँकी ८ पेजमा

## नयाँ नाका भनेर मात्रै के गर्नु

नयाँ नाका खुल्यो, दश दिनमै सामान स्वाट्ट ! देशमा सुन तस्कर कतिसम्म सल्बलाएका छन् भन्ने एउटा दृष्टान्त हो यो ।

प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' ले चीन भ्रमणबाट फर्किएपछि निक्कै हौसिएर नयाँ सीमा नाका खोल्नेबारे चर्चा त गर्नुभयो । तर, न नेपालका निम्ति, न त चीनकै निम्ति 'नयाँ' चाहिएको छ । भएकैलाई व्यवस्थापन नगर्दा दुबैतिर उत्तिकै दु:ख मडारिएका छन् । यही स्थितिमा तिब्बतका प्रान्तीय पार्टी सचिव वाङ जुनचेङ नेपालको मुस्ताङमा अवस्थित नाका कोरोलाको औपचारिक शुरुवातका निम्ति अर्को महिना आउने भएका छन् । जबकि, वर्षौंदेखि सञ्चालनमा आई हाल आंशिक रूपमा मात्रै खुला भएको तातोपानी नाकालाई पनि मानव आवतजावतका लागि नभई सामान ओसापसारका लागि मात्रै खुला गरिएको छ । किनभने, उनीहरूलाई सुरक्षा चुनौति बढी छ । यसरी चीनलाई सुरक्षाको, नेपाललाई तस्करीको खतरा बढिरहेको बेला प्रधानमन्त्रीको भ्रमणका क्रममा संयुक्त सीमा अनुगमनबारे एक समझदारी भएको छ ।

प्रधानमन्त्रीको भ्रमणका क्रममा नेपालले कालापानी, लिपुलेक र लिम्पियाधुराको जमिन समेटी जारी गरेको नक्साबारे ठेस छलफल त भएन । तर, नेपाल-चीन सिमानालाई अद्यावधिक गर्न दुई पक्षीय निरीक्षण टोली बनाउने सहमति भने जुटेको छ । सन् २००६, अर्थात् २०६२ सालपछि नेपाल र चीनको संयुक्त टोलीले सीमा क्षेत्रको संयुक्त निरीक्षण गरेको थिएन । दुई देशबीच ७८ ठाउँमा ९९ वटा मार्कर (स्तम्भ) रहेको छ । त्यसमध्ये दोलखामा अवस्थित ५८ बाँकी ७ पेजमा

## उड्ने हेलिकोप्टर गुडेर भारततिर

हेलिकोप्टर उड्ने त आकाशमा हो तर ट्रक चढेर यही हप्ता मुम्बई पुग्दै छ ! खरिदका नाममा सेनाभित्र मौलाएको अनियमितताले यसरी हेलिकोप्टरलाई ट्रक र कन्टेनरमा पोको पार्ने दु:ख आइलागेको हो ।

सेनाले दीपक भट्टसहितका बिचौलियामार्फत सन् २०१५ मा खरिद गरेको, तर प्रयोगमा खासै नआएका हेलिकोप्टर अन्तत: मर्मतका लागि मुम्बई लैजानुपरेको छ । खरिद गर्दैमा पुरानो मोडलको इञ्जिनलाई लागत मूल्यभन्दा अत्यधिक रकम तिराइएको थियो । त्यसबाट ठेकेदार, बिचौलिया र सेनाका केही हाकिम आर्थिक रूपमा त लाभान्वित भए । तर, हेलिकोप्टरचाहिँ वर्षौंदेखि एयरपोर्टको हवाई अड्डामा छोपेर राखिएको थियो । त्यसरी खरिद गरिएका दुई हेलिकोप्टरलाई नेपाली आकाशमा उड्नसक्ने बनाउन मर्मतका निम्ति पठाइएको हो । सम्पूर्ण पार्टपुर्जा खोली एउटालाई ट्रकमा हालेर र अर्कोलाई ४० फिट लम्बाई भएको कन्टेनरमा पोको पारी टायर, सिसा, जिउ सबै नयाँ बनाउन रक्सौल नाका हुँदै हिजो भारत पठाइएको छ । रसियाबाट ल्याइएका ती दुई हेलिकोप्टर भारतको रक्षा मन्त्रालयअन्तर्गत एक कम्पनीले बनाउने भएको छ । त्यसका लागि मुम्बईको जुहु विमानस्थलमा पठाइएको हो । तर, हेलिकोप्टरको इञ्जिनचाहिँ बनाउनका निम्ति रसिया नै पुग्ने भएको छ । जिटुजी, अर्थात् सरकार-सरकारका बीचमा सम्झौता भएको कारण मर्मतका नाममा रकमको हिनामिना त खासै हुँदैन । बाँकी ८ पेजमा

## यस्तो सम्झौता, कार्यान्वयनमा शंकैशंका

नेपाल सरकारले आन्दोलनरत शिक्षक, राहत शिक्षक तथा बालविकासका सहजकर्ताहरूसँग गरेको सहमतिले राजनीतिमा भीड जम्मा गर्न सके जेमा पनि सरकारलाई घुँडा टेकाउन सकिने रहेछ भन्ने नजिर स्थापित हुन पुगेको छ । कतिपय जायज मागहरूसँगै राजनीतिक रोटी सेक्ने नाजायज मागमा पनि सहमति गरेको देखिएपछि यस्तो दाबी गरिएको हो । शिक्षामन्त्री अशोककुमार राईकै सामु राहत शिक्षकको सीमित प्रतिस्पर्धासम्बन्धी व्यवस्थालाई एक पटकका लागि आन्तरिकतर्फ सतप्रतिशत कायम गर्ने सहमति भएको छ । यो सहमतिका कारण शिक्षकमा जागिर खुल्ला र प्रतिस्पर्धा गरौंला भन्ने युवायुवतीहरू विदेश पलायन हुनुपर्ने बाध्यता सिर्जना भएको छ । यो सहमतिसँगै नयाँ शिक्षक भर्नाको लागि एकपटक भए पनि बाटो बन्द भएको छ । जबकि शिक्षकको जागिर मुश्किलले ५।१० वर्षमा एक पटक खुल्ने गर्थ्यो । रोजगारी नपाएका उर्जाशील, योग्य र क्षमतावान युवायुवती यस्तो नाजायज माग देखेर सरकारसँग निराश भएका छन् । राहत शिक्षककै जाँचमा अनुत्तीर्ण हुनेहरूलाई पनि विशेष आर्थिक प्याकेजको व्यवस्था गर्न आन्दोलनरत शिक्षकसँग यसपटक सरकारले सहमति गरेको छ । संसदमा दर्ता भएको विधेयकमा आन्तरिकतर्फ ५० प्रतिशत कायम राख्ने उल्लेख भए पनि शिक्षक महासंघको आन्दोलनमा ७५ प्रतिशत पुऱ्याउने सहमति थियो तर त्यसमा असहमत बाँकी ८ पेजमा

## कहिले आउने नयाँ माननीय ?

संघ, प्रदेश र स्थानीय तहका गरी रिक्त २२ स्थानमा आगामी वैशाखमा मात्रै उपचुनाव सक्न निर्वाचन आयोगले तयारी थालेको छ । सरकारबाट सहमति पाएसँगै आयोग तदनुरुप तयारीमा जुटेको हो । हाल संघ र प्रदेशमा एक-एक तथा स्थानीय तहमा २० पद खाली छ । एमाले उपाध्यक्ष सुवास नेम्वाङको असामयिक निधनसँगै इलाम-२ जनप्रतिनिधिविहीन भएको छ भने गाडी दुर्घटनामा परी सुदूरपश्चिम प्रदेशका मन्त्री पृथ्वीबहादुर सिंहको निधन भएकाले बझाङ १ 'क' पनि रिक्त छ । कानुनत: यी दुवै स्थानमा पदपूर्ति गर्नै पर्ने हुन्छ ।

संविधानमा प्रतिनिधिसभा र प्रदेशसभाको कार्यकाल ६ महिनाभन्दा बढी अवधि बाँकी छँदै कुनै सदस्यको स्थान रिक्त भएमा त्यस्तो स्थान जुन निर्वाचन प्रणालीबाट पूर्ति भएको थियो सोही प्रक्रियाद्वारा पूर्ति गरिने व्यवस्था रहेकाले यी दुवै निर्वाचन बाँकी ८ पेजमा

## उता मान्छे मर्ने, यता डिआइजी घुर्ने

प्रदेश हाँक्ने हाकिमहरूले आफ्नो जिम्मेवारीलाई गम्भीरताका साथ नलिँदा स-साना दुर्घटनामा समेत ठूलो क्षति व्यहोर्नुपर्ने खतरा पैदा भएको र घटना घटेर सामसुम भइसक्दासमेत डिआइजीहरू क्वार्टरमै निदाइरहेको पाइएको छ । सन्दर्भ हो, बाँकेको डुडुवा गाउँपालिका वडा नम्बर ६, आसमानपुरस्थित जयेन्दु बालसुधार गृहको काण्ड । हालै मात्र त्यहाँ एकदमै अप्रिय घटना घट्यो । प्रदेश प्रहरीको नेतृत्वले नै घटनाबारे सबैभन्दा अन्तिममा थाहा पायो । गत असोज ५ गते सुधार गृहमा लफडा भयो । विभिन्न अपराधमा सजायँ काटिरहेका बालबालिकाबीच झडप हुँदा एक जनाको ज्यान गयो । यता, १० जना गम्भीर घाइते भए ।

बन्दीहरू सोही मौकाको फाइदा उठाउँदै भागे । तोडफोड, आगजनीले स्थिति तनावग्रस्त बन्यो । घटनालाई नियन्त्रणमा लिन ठूलो संख्यामा प्रहरी परिचालन बाँकी ८ पेजमा

# यो भ्रमणमा खास के चाहिँ भएको हो ?

कूटनीतिक मामिला र अन्तर्राष्ट्रिय सम्बन्ध सञ्चालनमा समेत दलीय कित्ताबन्दी हुने नेपालमा कार्यकारी प्रमुखले गर्ने हरेक विदेश भ्रमणलाई आ-आफ्नो अनुकूलतामा प्रचार गरिन्छ । गएको मुलुकमा कसले स्वागत गऱ्यो, पहिरन कस्तो थियोजस्ता नितान्त प्राविधिक विषयमा अल्मलिने र त्यसैको पक्ष-विपक्षमा आत्मरति लिने पुरानै प्रचलनले भ्रमणबाट मुलुकले के पायो भन्ने मूल सवाल सधैं ओझेलमा पर्ने गरेको छ । प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डको पछिल्लो चीन भ्रमणपछि पनि त्यसैगरी चर्चा परिचर्चा हुन थालेको छ ।

यस्ता भ्रमणलाई लिएर सत्ता र प्रतिपक्षबीच जुङ्गाको लडाईं चल्नु नेपाली राजनीतिको विशेषता नै हो । त्यसकारण प्रधानमन्त्रीको चीन यात्रालाई लिएर पनि आ-आफ्नै लाइनमा अनलाइनका पेज र अखबारका पाना रंगिनु अनौठो भएन । चीनमा प्रधानमन्त्रीले जुन तहको स्वागत पाएको देखियो, त्यसमा फर्म्याट र प्रोसेस दुबै हिसाबले महत्व दिएको नै बुझ्न सकिन्छ । तर, कन्टेन्टका हिसाबले भ्रमण कति उपलब्धिमूलक रह्यो ? त्यसमा भने तथ्यमा टेकेर विश्लेषण गर्नुपर्ने हुन्छ ।

पक्कै पनि यसपटक सबैभन्दा बढ्ता अपेक्षा गरिएको विषय थियो, बिआरआइ सम्झौता । तर, हस्ताक्षर भएन किन ? बिआरआइको अवधारणा र यसको प्राविधिक पक्षसँगै आन्तरिक तयारीका कुरा नबुझेसम्म प्रष्ट जवाफ आउँदैन । चीनलाई विश्वसँग जोड्ने यो परियोजनालाई सि चिनफिङको 'ड्रिम कन्सेप्ट' मानिन्छ । यो कुनै एउटा सेक्टर वा विषयमा मात्रै सीमित परियोजना होइन । समग्रतामा हेर्दा बिआरआइ भनेको कनेक्टिभिटी हो, विकास हो, कृषि हो, संस्कृति हो, मानव विकास हो । र, समग्रमा डिटेल फेमवर्क हो । त्यसो हुँदा यसको तयारी पनि बृहत् हुन्छ, हुनुपर्छ । त्यसका लागि नेपालका सबै निकायले सोही रूपमा तदारुकता देखाएर आ-आफ्नो क्षेत्रमा गृहकार्य गरी प्रस्ताव तयार गर्नुपर्थ्यो । तर, यसपालि त्यो तयारी भएको पाइएन । फलत: प्रधानमन्त्रीको भ्रमणमा दुवै पक्षबीच यो विषयलाई थाती राखेर आ-आफ्नो तर्फबाट आवश्यक तयारी पूरा गरी छिट्टै परियोजना अगाडि बढाउने सहमति भएको छ । त्यसकारण बाहिर चर्चा गरिएजस्तो न बिआरआइमा कुनै पक्षले हलो अड्काएको हो, न सम्झौता भएर कार्यान्वयनको चरणमा प्रवेश गरिसकेको अवस्था नै हो ।

प्रधानमन्त्री प्रचण्ड र समकक्षी लि छ्याङबीचको दुई पक्षीय वार्तापछि संयुक्त विज्ञप्ति सार्वजनिक गर्न ढिलाइ भएको विषय पनि त्यसैगरी प्रचारमा आयो । भनियो, केही विषयमा कुरा नमिलेकाले चीनले वक्तव्य दिन नचाहेपछि शुरुमा रोकियो र पछि सहमति गरेर सार्वजनिक गरियो । तर, परराष्ट्र मन्त्रालयको दाबी छ, यस्ता विषयमा संवेदनशील हुनुपर्ने भएकाले दुवै पक्षको सहमतिमै समय लिइएको हो । विश्वव्यापी रूपमै प्राय: भ्रमण सम्पन्न भएपछि संयुक्त वक्तव्य जारी गर्ने अभ्यास रहँदै आएको छ । किनभने द्विपक्षीय वार्तापछि गरिने सहमतिबारे कुनै एउटा पक्षले एक्लै घोषणा गर्न सक्दैन । दुबैलाई अनुकूल समय मिलाएर वक्तव्यमा राख्ने भाषा र शब्द आपसी सरसल्लाहमा मिलाइनुपर्छ । दुवै पक्ष सहमत भएपछि बल्ल त्यो जारी हुने हो । प्रधानमन्त्री प्रचण्ड र उहाँका समकक्षी लि छ्याङबीच वार्ता सम्पन्न भएको भोलिपल्ट बिहानै संयुक्त वक्तव्य जारी गरिएको थियो ।

अर्को कुरा 'वन चाइना पोलिसी' कि वन चाइना प्रिन्सिपल' भन्ने बाँकी ६ पेजमा

## सकुञ्जेल खाने सचिवलाई सञ्चो

नेशनल पेमेन्ट गेटवेको २५ करोड भ्रष्टाचार काण्ड लागेर उद्योग सचिव मधुकुमार मरासिनी निलम्बित भए । त्यहींका अर्का 'इन्साइक्लोपेडिया' सचिवसमेत अब यसैको फन्दामा परे अनौठो नमान्दा हुन्छ । सार्वजनिक प्रशासनभित्र 'मुकुन्दे पात्रो' का रुपमा चर्चित मुकुन्द निरौला अहिले आपूर्ति सचिव छन् । उनैले प्रदेशमा सचिव हुँदा गरेको बदमासीका कारण अप्ठ्यारोमा पर्न लागेका हुन् ।

निरौलाले प्रदेशमा भतिजहरूलाई नै आकर्षक कार्यालयमा फिट गराएका थिए । यो रोग प्रदेशदेखि आपूर्ति सचिव हुँदा पनि जारी राखे । दुई साताअघि कम्पनी रजिष्ट्रारको कार्यालयका डबल डिग्रीवाला रजिष्ट्रार महेश बराललाई राष्ट्रिय योजना आयोगमा तानेर त्यहाँ भाञ्जा दिवस आचार्यलाई पठाउन खोजे । राष्ट्रिय सूचना आयोगको कार्यालयबाट दैनिक सयौंको संख्यामा कम्पनी दर्ता हुने त्रिपुरेश्वर खटाए पनि दिवसले त्यस्ता गन्हाउने र अख्तियारको बक्रदृष्टिमा बाँकी ८ पेजमा

## नोट अफ डिसेन्ट

दिनेश रायमाझी



# तीज र तिहार किन खल्लो यसपालि !

हाम्रा राजनीतिक दलको घोषणापत्र पनि महाभारत र रामायणजस्ता ग्रन्थ रहेछन् । सुन्दा आनन्द लाग्ने, रोमाञ्चित बनाउने, जुरुक जुरुक उचाल्ने तर जिन्दगीको गोरेटोमा, जीवनलाई समृद्ध बनाउन भने केही काम नलाग्ने । महाभारत र रामायणका कथा पढेर वा पढाएर रोमाञ्चित हुनेबाहेक त्यसले न रोजगारी सिर्जनामा सहयोग गर्छ, न स्वास्थ्य प्रणाली राम्रो बनाउन र महँगी घटाउन नै मद्दत गर्छ । राजनीतिक दलका घोषणापत्र पनि लगभग त्यस्तै छन्- ठुल्ठूला गफ र झुटा संकल्प लेखिएका । यिनका घोषणापत्र पल्टाउँदा के मात्रै पाइन्न ? कांग्रेसको पनि समाजवादै छ, उपेन्द्रको दलको पनि, बाबुराम भट्टराईको झन् समाजवाद नै छ । एमाले, माके र नेकपा (एस)को त कुरै नगरौं । यिनले त साम्यवादमै पुऱ्याउनेवाला छन् घोषणापत्रमा । समाजवाद अथवा साम्यवाद भनेको चानचुने विषय होइन । मान्छेलाई समृद्धिको उच्चतम् अवस्थामा पुऱ्याउने विचार हो । तर हेरौं त यथार्थ ! देशमा बेरोजगारी छ, मतलव छैन । चरम महँगी छ, मतलव छैन । दिउँसै नेतैलाई छप्काउँछन् तर वास्ता छैन । सिंहदरबारमा आगो लगाउँछु भन्छन्, मतलव छैन । शिक्षामा दलाली छ, स्वास्थ्य क्षेत्रमा दलाली छ मतलव छैन । मिल्यो त वाचा र कर्म ? मिलेन नि !

महिलाले पोहोर पह्रार जसरी यसपटक तीजको दर खाएनन्, उनीहरूमध्ये धेरैले नयाँ साडी ब्लाउज किनेनन्, मेकअप गर्न ब्युटी पार्लर गएनन् । अर्थात दिल फुकाएर तीज मनाउन सकेनन् । चाहेर यस्तो गरेका थिएनन् । यथार्थ के हो भने आफ्नो साथमा पैसा नभएकै कारण महिलाले तीज मनाउन सकेनन् । श्रीमतीका श्रीमान्हरूले पनि उस्तो पैसा उडाएनन् । किनभने पैसा आउने बाटो छैन र जमाना पनि महँगाइको छ । एक दिनको रमाइलो गर्ने पैसाले एक हप्ताको घर खर्च चल्छ भन्ने बुझेपछि यसपटकको तीजमा रमझम कम हुन पुग्यो । पोहोर परार यस्तो कमै हुन्थ्यो, धेरैले खर्च गरेका थिए । यस्तो किन भएको होला ? झ्यास्स हेर्दा त तीजमा फजुल खर्च नभएकै राम्रो भन्ने लाग्छ तर यो फजुल खर्चसँग भन्दा पनि जनताको गोजीसँग सम्बन्धित विषय हो । किन यस्तो भइरहेको छ ? यसलाई कसरी रोकेर, सुधार गरेर, नयाँ अवस्था तयार पारेर जनताको गोजीमा पैसा पुऱ्याउने भन्ने विषयमा खै त छलफल भएको बाँकी ८ पेजमा

आस्था प्रकाशन प्रा. लि.को निमित्त
सम्पादक : किशोर श्रेष्ठ
प्रबन्ध सम्पादक : राजेन्द्र स्थापित
कार्यकारी सम्पादक : विश्वमणि सुवेदी
कार्यालय : सानेपा, ठाडोढुंगा, ललितपुर
फोन : ५५४१५५२, ५५२२५५१
इमेल : jana . aastha@gmail . com
वेबसाइट : www . janaaastha . com
मुद्रण : सुजल अफसेट प्रेस, बागबजार, फोन : ४२३३४५९

# सम्पादकीय

## डिजाइनरलाई खै दिएको दण्ड ?

पूर्वाधार विकासमा सबैभन्दा महत्वपूर्ण प्रक्रिया हो, 'इन्भाएरोमेण्टल इम्प्याक्ट एसेस्मेण्ट (ईआइए)' । यसलाई वातावरणीय असरसम्बन्धी अध्ययन पनि भनिन्छ । ठूला भौतिक पूर्वाधारका प्रोजेक्टहरूमा ईआइए निकै जरुरी हुन्छ । यसले आयोजना स्थल, त्यसले वातावरण, मानव बस्ती, वन्यजन्तुमा पर्ने प्रभावबारे अध्ययन गर्छ । ईआइएपछि डिपीआर गरिन्छ । ईआइए र डिपीआर नगरिकन कुनै पनि भौतिक पूर्वाधार निर्माणको कार्य अघि बढाउन मिल्दैन । तर, मुलुकमा ईआइए गरेर बनाइएका अधिकांश परियोजनाले 'फेल' खाइरहेको अवस्था छ । राष्ट्रिय गौरवको 'मेलम्ची खानेपानी आयोजना' यसको राम्रै उदाहरण हो । वि.सं. २०४८ सालमै तत्कालीन प्रधानमन्त्री कृष्णप्रसाद भट्टराईले मेलम्चीको खानेपानी ल्याएर काठमाडौंबासीलाई खुवाउने घोषणा गरेका थिए । सोही घोषणापश्चात् वि.सं. २०५२ मा मेलम्ची खानेपानी लिमिटेड स्थापना गरियो र ०५५ सालमा बल्लतल्ल आयोजना शुरु भयो । सरकारको लगानी र एशियाली विकास बैंकको ऋण लिएर भौतिक निर्माण थालिएको दुई दशकपछि मेलम्चीको थोरै पानी काठमाडौं त आयो तर त्यो पनि दिगो छैन । अर्बौं खर्च गरेर बनाइएको मेलम्चीमा एकपछि अर्को अवरोध देखिएपछि सर्वसाधारण आजित छन् । हरेक वर्ष बाढी आउँदा मेलम्ची नदीमा बनाइएको संरचनामा ठूलो क्षति पुग्ने गरेको छ । वि.सं. २०७८ सालको शुरुमै विनाशकारी भेलबाढीले गम्भीर क्षति पुगेको मेलम्चीको पानी हरेक वर्ष बर्खा लाग्नेबित्तिकै बन्द गरिन्छ । वर्षको चार-पाँच महिना मेलम्ची अवरुद्ध हुन्छ । यता, बाढीले पुऱ्याउँदै आएको क्षतिको कुनै लेखाजोखा नै छैन । मर्मत सम्भारमा मात्रै वर्षेनि ठूलो धनराशी खर्चिने गरिएको छ । अस्तिको वर्षाले पनि मेलम्चीमा ठूलो क्षति पुगेको छ । पानी ल्याउने ठाउँ पूरै ग्रेगरले ढाकिएको छ ।

यता, ललितपुरको ग्वार्को चोकमा निर्माणाधीन 'फ्लाइओभर' का कारण सर्वसाधारणले झण्डै एक वर्षदेखि सास्ती खेप्दै आएका छन् । त्यहाँ अत्यधिक ट्राफिक जाम हुने गरेको छ । मज्जाले सवारी साधन गुडिरहेको बाटोलाई धमाधम भत्काएर अलपत्र पारेपछि डिजाइन परिवर्तन गर्दा निर्माणमा ढिलाइ भएको हो । सडक विभागअन्तर्गत गुणस्तर, अनुसन्धान तथा विकास केन्द्रले निर्माण ठेक्का पाएको कम्पनीको मागअनुसार डिजाइन संशोधन गरेपछि बल्लतल्ल काम अघि बढाइएको छ । हालसम्म पुल निर्माण गरेको मात्र अनुभव भएको समानान्तर, आशिष र रेलिगेर जेभीले ठेक्का लिएको 'फ्लाइओभर' बन्ने विषयमै शंका छ । कार्यालय समयमा ग्वार्को सडकखण्ड पार गर्न हम्मेहम्मे हुन्छ । बालकुमारीदेखि नै जाम हुने गरेकाले सर्वसाधारणलाई धेरै सास्ती छ । उता, चितवनको भरतपुर महानगरपालिका र तनहुँको आँबुखैरेनी गाउँपालिका जोड्ने घुमाउरो पुल निर्माण गर्न चार पटक म्याद थप भइसकेको छ । वर्षौं बितिसक्दा पनि ठेकेदार कम्पनीले काम सकाउनमा चासो देखाएको छैन् । 'बूढीगण्डकी जलविद्युत परियोजना' पनि अलपत्र अवस्थामा छ । नेपाल सरकारकै लगानीमा निर्माण गर्ने भनिएको आयोजना कहिले बन्छ ? ठेगान छैन । आयोजनाको निर्माण प्रक्रिया अघि नबढ्दै त्यहाँ मुआब्जा दिने नाममा अर्बौं रूपैयाँ खर्च भइसकेको छ । आयोजनाबाट प्रभावित स्थानीयले सरकारसँग स्थायी बसोबासको माग गरिरहेको अवस्था छ । झण्डै तीन खर्ब लागत अनुमान गरिएको आयोजनाका लागि सरकारले आयातित पेट्रोलियम पदार्थबाट प्रतिलिटर पाँच रूपैयाँ पूर्वाधार कर उठाउँदै आएको छ । त्यसरी जम्मा भएको रकम कति पुग्यो अत्तोपत्तो छैन । नयाँ बनाउने नाममा भएकालाई भत्काउने, बिगार्ने अनि ठूलो धनराशी खर्च गर्ने चलन नै चलेको छ । एउटै कामका लागि पटकपटक ठेक्का लगाउने र राज्यको ढुकुटीमाथि आर्थिक भार थप्ने काम मात्रै भइरहेको छ । विश्वका अन्य मुलुकले 'सिष्टमेटिक प्लान' बनाएर दिगो विकास गरिरहँदा नेपाल भत्काउन र राज्यकोषमा आर्थिक भार थप्नमा मात्रै केन्द्रित छ । भौतिक पूर्वाधार पर्यटक तान्ने सबैभन्दा राम्रो माध्यम हो । तर, सरकारी अधिकारीहरूले यसलाई अनदेखा गरिरहेको अवस्था छ ।

अधिकांश आयोजना शुरु हुनेबित्तिकै फेल हुने गरेको छ । बजेट सक्न र सस्तो लोकप्रियता कमाउनका लागि हतारहतारमा काम शुरु गरेर बीचमै अलपत्र पार्ने रीत नै बनिसकेको छ । यसले गर्दा जहिले पनि सर्वसाधारण मर्कामा पर्ने गरेका छन् । निर्माण थाल्नुअगाडि डिजाइन तयार पारिन्छ । ईआइए, डिपीआर गरिन्छ । तैपनि आयोजनाले बीचमै फेल खान्छ, किन ? विकासको नाममा विनाश किन हुन्छ ? निर्माण थालिएपछि विभिन्न बहाना बनाएर काममा ढिलासुस्ती गर्ने र बजेट बढाउने खेल हुन्छ । ग्वार्कोको सडक खनिसकेपछि मेसिन नपाइएको भन्दै डिजाइन परिवर्तन गरियो । यसको जिम्मेवारी कसले लिने ? अर्बौं लगानी गरेर बल्लतल्ल दुई दशकपछि मेलम्चीको पानी आयो । तर, त्यो पनि दिगो भएन । भत्किने र बिग्रिने क्रम जारी नै छ । प्रश्न उठ्छ, मेलम्ची आयोजना ल्याउँदा विज्ञले के आधारमा ईआइए गरे ? 'ईआइए गर्नेहरूले के हेर्छन् ? ईआइए फेल हुन्छ, आयोजना बिग्रिन्छ, भत्किन्छ भने यिनीहरूले जिम्मेवारी लिनुपर्दैन ? तिनलाई कारबाही गर्ने कि नगर्ने ? निजगढ एयरपोर्टका हकमा पनि यस्तै कुरा आएको छ । पोखरा र भैरहवामा क्षेत्रीय विमानस्थल त बने । तर, जे उद्देश्यका साथ बनाइयो, त्यसअनुसार सञ्चालनमा आएनन् । यी दुई प्रयोगका आधारमा अब निजगढमा एयरपोर्ट बनेछ नै भने पनि खासै उपलब्धिमूलक हुने देखिँदैन । बरु, त्यसको सट्टा सिमरा विमानस्थललाई नै विस्तार गरे राम्रो हुने कुरा उठिरहेको छ ।

यसरी देशका ठुल्ठूला परियोजनाका नाममा पैसा खाने, भत्काउनेहरूले सबै परियोजना बिगारिरहेका छन् । चीन र अमेरिकाले जस्तो सिस्टमेटिक प्लान बनाएर योजना सफल बनाउनुपर्नेमा कसरी पैसा कुम्ल्याउन सकिन्छ भन्नेतिर नेपालीहरू केन्द्रित हुँदै छन् । बंगलादेशको पद्मा नदीमा वर्ल्ड बैंक र आइएमएफले पैसा नदिने भनेपछि बंगाली आफैंले लामो पुल बनाए । अहिले नौ प्रतिशत जिडिपी गंगामा बनाएको पुलले ओगटेको छ । जि-२० को सम्मेलनमा बंगलादेशलाई मोदीले निम्ता दिए, तर नेपालको नामोनिशान छैन ।



# आयल निगम नै संलग्न भयो अत्याचारमा

शीर्षक पढेरै भाउन्न हुँदो हो, नेपालमा पेट्रोलियम पदार्थको कारोबार गर्ने एक मात्रै निकाय नेपाल आयल निगम छ । निगमले नै सबै पेट्रोलियम पदार्थको कारोबार गर्छ । यसको मुख्य उद्देश्य भनेको उपभोक्ता चुसेर यससँग सम्बन्धित सबैलाई पोस्नु हो । आफूलाई चर्को नाफा राख्नु, सञ्चालन खर्च अत्यधिक गर्नु, ढुवानी व्यवसायी र बिक्रेतालाई मोटो रकम कमिशन खुवाउनु, अनि सिण्डिकेटको पक्षपोषण गर्नु । यसले चलाइरहेको धन्दा नै यही हो ।

खरिद मूल्यमा २० प्रतिशतभन्दा बढी नाफा राखेर बिक्री गरेको पाइएमा कालोबजारी भएको मानिन्छ । अहिले आयल निगमले पेट्रोल १०२ रुपैयाँ ७३ पैसामा खरिद गरेर १८३ रुपैयाँमा बिक्री गर्छ । यत्ति हुँदा पनि उसलाई २ रुपैयाँ २९ पैसा मात्रै नाफा छ । यस्तै डिजेल ११८ रुपैयाँ ४० पैसामा किनेर १७३ रुपैयाँमा बिक्री गर्दा २ रुपैयाँ ४ पैसा घाटा देखाउँछ । खाना पकाउने ग्यास १ हजार ४ सय ५८ रुपैयाँ ९४ पैसामा किनेर १ हजार ८ सय ९५ रुपैयाँमा बेच्दा पनि १८१ रुपैयाँ ५३ पैसा प्रतिसिलिण्डर नोक्सान रहेको देखाएर इन्धनको मूल्यवृद्धि गरेको थियो । तर २४ घण्टापछि फिर्ता लियो । निगमले शनिबार राति १२ बजेबाट लागू भएको मूल्यवृद्धि आइतबार राति १२ बजेदेखि लागू हुने गरी फिर्ता लिएको हो । चाडबाडको मुखमा मूल्यवृद्धि भएको भन्दै सरकारको चौतर्फी आलोचना भएको थियो । निगमले प्रधानमन्त्रीको निर्देशनबमोजिम मूल्यवृद्धि फिर्ता गरेको जनाएको छ ।

खाद्यान्नदेखि दैनिक उपभोग्य दाल, चामल, गेडागुडी र मसलाजन्य वस्तुमा व्यापारीले मनोमानी मूल्य बढाएर रन्थनिएका नागरिकलाई सरकारले पनि प्रत्येक १५-१५ दिनमा महँगी नै उपहार दिन्छ । सरकारले सोमबारदेखि खाना पकाउने ग्यासको मूल्य एकै पटक २१५ रुपैयाँले बढाएर नागरिकको भान्सा थप महंगो बनाएको भन्दै चौतर्फी आलोचना भयो । त्यसपछि ग्याससँगै डिजेल, पेट्रोल र मट्टितेलको वृद्धि भएको मूल्य फिर्ता लिइएको छ । तर स्वचालित मूल्य प्रणाली लागू गरेको नाममा निगमले आफूलाई अधिक नाफाको ग्यारेन्टी गर्दै नागरिकको ढाड सेक्दै आएको छ । पछिल्लो ४५ दिनमा ग्यासको मूल्य प्रतिसिलिण्डर १०५ रुपैयाँ बढाइसकेको छ । यस्तै पेट्रोलमा १८ रुपैयाँ, डिजलमा २७ रुपैयाँ मूल्य बढाइएको छ । त्यसको सिधा प्रभाव नागरिकको दैनिकीमा परेको छ । इन्धन बढेको नाममा खाद्यान्नदेखि तरकारीसम्ममा मूल्य बढाइन्छ । पेट्रोलियम पदार्थको मूल्य घटेर आएका बेला आफ्नो घाटा देखाएर घटाउन आनाकानी गरेको निगमले पछिल्लो समय अन्तर्राष्ट्रिय व्यापारलाई देखाएर कालोबजारी गर्न दाउ हेरी बस्ने व्यापारीकै इशारामा मूल्य बढाइरहेको छ । स्वचालित

**वैकुण्ठ ढकाल**



मूल्य पछिल्लो समय मूल्य बढाउन निगमले रचेको साजिस हो यो । किनकि अन्तर्राष्ट्रिय बजारमा कच्चा तेलको मूल्य तल्लो विन्दूमा झरेर उकालो लाग्ने निश्चित भएपछि आफ्नो नाफाको ग्यारेन्टी गर्न र नागरिकको ढाड सेक्न असार ३१ गतेदेखि इन्धनमा स्वचालित मूल्य प्रणाली लागू गरेको थियो । स्वचालित मूल्य लागू गरेपछि निगमले १ अर्ब २७ करोड रुपैयाँ नाफा कमाइसकेको छ । गत वर्षसम्म सरकारले खाना पकाउने ग्यासमा प्रतिसिलिण्डर ६ सय रुपैयाँ अनुदान दिन्थ्यो । त्यो पनि हटाएर त्यसको भार पनि नागरिकमा थोपरिएको छ ।

निगमले सिण्डिकेटका नाइके ढुवानीकर्ता तथा पेट्रोल पम्पलाई अत्यधिक नाफा कमाउन दिएर उपभोक्तालाई

**निगमले एक लिटर पेट्रोल विक्री गरेबापत ६ रुपैयाँ १४ पैसा पम्पहरूलाई दिन्छ । एक ट्यांकर पेट्रोल बेच्दा पम्पहरूलाई १ लाख २२ हजार ८ सय रुपैयाँ नाफा हुन्छ । यस हिसाबले पम्पले आम्दानी गर्छ– एक महिनामा ७३ लाख ६८ हजार ।**

चरम शोषण गरिहेको छ । एक लिटर पेट्रोलमा निगमले ढुवानी भाडाबापत मात्रै ६ रुपैयाँ २४ पैसा तिर्ने गरेको छ । यसअनुसार एक ट्यांकर (२० हजार लिटर) पेट्रोलको ढुवानीबापत निगमले १ लाख २४ हजार ८ सय रुपैयाँ तिर्छ । ढुवानीकर्तालाई मात्रै होइन, निगमले उपभोक्ता लुटेर पेट्रोल पम्पको खल्ती माटो बनाउने कामसमेत गरिरहेको छ । निगमले एक लिटर पेट्रोल विक्री गरेबापत ६ रुपैयाँ १४ पैसा पेट्रोल पम्पहरूलाई दिन्छ । एक ट्यांकर पेट्रोल बेच्दा पम्पहरूलाई १ लाख २२ हजार ८ सय रुपैयाँ नाफा हुन्छ । एउटा पेट्रोल पम्पले एकदमै कम पेट्रोल बेच्दा पनि दुई ट्यांकर बिक्री गर्ने व्यवसायीहरू बताउँछन् । यस हिसाबले पेट्रोल पम्पले दिनमा कम्तीमा पनि २ लाख ४५ हजार ६ सय रुपैयाँ आम्दानी गर्छ-एक महिनामा ७३ लाख ६८ हजार । ठूला पम्पले त एक महिनामै करोडौं नाफा कमाउँछन् । यसरी लामो समयदेखि सिण्डिकेट चलाउँदै आएका व्यापारीहरूको खल्तीमा अर्बौं रुपैयाँ हालिदिएर निगमले उपभोक्तामाथि चरम शोषण गरिरहेको हो ।

गत आर्थिक वर्ष नेपालमा ६८ करोड ८ लाख ६ हजार लिटर पेट्रोल खपत भयो । त्यसबापत ढुवानी व्यवसायीले मात्रै ४ अर्ब २४ करोड ८२ लाख रुपैयाँ निगमबाट बुझेका छन् । त्यस्तै, पेट्रोल पम्पहरूले ४ अर्ब १८ करोड रुपैयाँ नाफा खाएका छन् । यसरी नेपालका ढुवानी व्यवसायी र पेट्रोलपम्प सञ्चालकले पेट्रोल बेचेर मात्रै ८अर्ब ४३ करोड रुपैयाँ कमाए । डिजेल, मट्टितेल, ग्यास, हवाई इन्धनको त यसमा हिसाब नै छैन । डिजेलमा ढुवानी भाडा प्रतिलिटर ३ रुपैयाँ १ पैसा र पम्पलाई नाफा ४ रुपैयाँ ८८ पैसा तोकिएको छ । त्यस्तै, मट्टीतेलमा यस्तो नाफा क्रमश: ६ रुपैयाँ २४ पैसा र ४ रुपैयाँ ७६ पैसा छ । ग्यासमा भने प्रतिसिलिण्डर २ सय ९६ रुपैयाँ ९६ पैसा विक्रेताको खर्च तथा नाफा तोकिएको छ । ग्यास उद्योगीले ढुवानी तथा बोटलिङ पनि यसैबाट गराउँछन् । यस हिसाबले गत आर्थिक वर्ष ग्यास व्यवसायीले मात्रै खर्च र नाफा गरेर उपभोक्ताबाट १० अर्ब ७५ करोड ६२ लाख रुपैयाँ लिएको देखिन्छ । मुलुकमा परम्परागत रुपमा सिन्डिकेट चलाइरहेका ढुवानी तथा पेट्रोलपम्प सञ्चालकहरू आयल निगमका उच्च अधिकारीहरूसँगको मिलेमतोमा बेलाबेला आन्दोलन गर्छन् । ढुवानी र पम्प बन्द गरेर इन्धनको हाहाकार गराउँछन् । अनि ढुवानी तथा पम्पको नाफा बढाउन बाध्य बनाउँछन् ।

निगमले संसदीय निर्वाचनको मुखैमा २०७९ साल कात्तिक २७ मा १९ सय ट्यांकरको भाडा कम्तीमा ५ देखि बढीमा १० प्रतिशतसम्म वृद्धि गरेको थियो । जसबाट उपभोक्ताले थप ८० करोड तिर्नुपऱ्यो । दुई वर्षअघि भाडा समायोजनसम्बन्धी अध्ययनमा १० प्रतिशतसम्म भाडा बढ्दा निगमलाई ८० करोड हाराहारी व्ययभार थपिने निश्कर्ष निकालिएको थियो । देशभरका आन्तरिक र बाह्य गरेर ३६ वटा गन्तव्यमा इन्धन ढुवानी गर्ने ट्यांकरले बढेको भाडा निगमबाट लिन्छन् । सिण्डिकेटधारी व्यवसायीलाई अत्यधिक नाफा दिलाउन उदार आयल निगम उपभोक्तालाई राहत दिने सन्दर्भमा भने अनुदार रहँदै आएको छ । सरकारले पनि इन्धनमा ६० प्रतिशतभन्दा बढी कर असुल्ने गरेको छ । त्यसबाहेक कसरी नाफा कमाउने र बोनस खाने भन्नेबाहेक अरु कुनै ध्यान नभएका निगमका कर्मचारी र निगमले जसोजसो गर्छ उसैउसै सदर गर्ने पुष्पकमल दाहाल प्रचण्ड नेतृत्वको यो सरकार सरकार हो कि कालोबजारी गर्न साइत हेरेर बस्ने व्यापारी हो ? नागरिकले प्रश्न गरिरहेका छन् । आइतबार प्रतिनिधिसभा बैठकमा आयल निगमले थाहै नदिई इन्धनको मूल्य बढायो भनेर कसरी बोल्न सकेका होलान् ?

# शहरभित्र

**सुरेश**



## 'सर्वसम्मत' गुट

*गएको आम चुनावमा त केपी बा पार्टीगत हिसाबले हारेकै हो, अहिले आफ्नै पार्टी भित्र पनि धमाधम हार्दै जान थाल्नुभएको छ । विभिन्न प्रदेशमा हुँदै गरेका अधिवेशनहरूमा केपी बा एवं उहाँका 'पुत्र' हरू धमाधम हार्दै छन् । वास्तवमा केपी बाले आफ्ना मान्छेहरू यसरी हार्लान् भनेर नै त्यहाँ चुनाव नगरी 'सर्वसम्मत' नेतृत्व चयन गर्न सुझाव दिँदै आउनुभएको थियो । तर सुझाव कसैले मानेनन् । किनभने सबैलाई थाहा थियो, 'सर्वसम्मत' गर्ने भनेकै ओलीको मान्छे राख्ने भनेको हो । त्यस्तो 'सर्वसम्मत' लाई कसैले मानेन । ओलीका मान्छेहरू फेरि यस्ता थिए जो 'सर्वसम्मत' भए मात्रै जित्ने, चुनाव भए हार्ने । ओलीको नारा थियो- चुनाव भएमा पार्टीभित्र गुट जन्मन्छ, त्यसैले चुनाव हुन्न, सर्वसम्मत चाहिन्छ ।*

*तर उहाँका कार्यकर्ताहरू चकित छन् । जुन नेताले मदन भण्डारी फाउण्डेशनका नाममा एमालेभित्र जीवनभर गुट बनाएर नेतृत्वलाई आच्छु आच्छु पारे, आज उही नेताले गुटको विरोध गरिरहेका छन् । गुटले कस्तो शक्ति आर्जन हुन्छ भन्ने शिक्षा त ओली आफैंले दिनुभएको होइन र ? अनि उहाँका कार्यकर्ता गुट नबनाई बस्न सक्छन् ? वास्तवमा सर्वसम्मतको नाममा ओली आफै पनि पार्टीभित्र 'सर्वसम्मत गुट' बनाउन उद्यत हुनुहुन्थ्यो । अब त्यो सम्भव भएन । शायद अध्यक्ष ओलीलाई अब त चेतना भयो होला, आफू कुन गुटमा छु भन्ने कुरा ।*

## आलु किन्दा सुन

*अब आलुको बोरामा पनि सुन आउन थालेछ । अस्तिसम्म मोटरसाइकलको ब्रेक शुमा हालेर ल्याउने गरिएको थियो । त्योभन्दा अघि जुत्ताको तलुवामा राखेर ल्याउने गरिन्थ्यो । अझ कहिलेकाहीं त सुटकेशमा फल्स बटम हालेर पनि ल्याइन्थ्यो । अहिलेचाहिँ आलुको बोरामा हालेर ल्याउन थालियो । यसरी सुनको पनि धेरै अवमूल्यन भइसकेछ । भलै बजारमा सुनको भाउ बढेको बढ्यै भए पनि यसको इज्जत भने घटेको घट्यै छ । अझ कुनै जमानामा त मलद्वारमा समेत सुन राखेर ल्याइन्थ्यो भन्ने सुनेको थिएँ ।*

*अब आलुको बोरामा सुन भेटिन थालेपछि बजारमा आलु महँगो हुन बेर छैन । किनभने हिजोसम्म किलो किलो आलु किन्ने ग्राहकले अबदेखि बोरा बोरा नै किन्ने सम्भावना बढेको छ । कतै आफूले किनेर लगेको बोरामै सुन भेटिने पो हो कि ? आलु किन्दा सुन भेटिन्छ भने किन बोरा बोरा नै नकिन्ने ? एउटा बोरामा एक किलो मात्रै भेटिए पनि जिन्दगी त मजैसँग चल्यो नि ! कि कसो ? बिचरा सुनलाई पनि गाह्रो छ । बोर्डर क्रस गर्न आलुको बोरामा लुकेर जो आउनु परिरहेको छ ।*

## मार्ने औषधी

*केही दिन भयो, रत्नपार्क-भोटाहिटीतिर एउटा मान्छे कराइरहेको- लौ आयो है मुसा मार्ने, उडुस मार्ने, साङ्ला मार्ने, मच्छर मार्ने औषधी !*

*अर्थात सडक छेउमै बसेर उनी मुसा मार्ने, उडुस मार्ने, साङ्ला मार्ने, मच्छर मार्ने औषधी बेचिरहेका थिए ।*

*अस्ति गएर सोधेँ, 'भाइ, तपाइँसँग मुसा मार्ने, उडुस मार्ने औषधी मात्रै छ कि अरु मार्ने औषधी पनि छ ?'*

*उसले सोध्यो, 'के मार्ने औषधी चाहियो दाइ ?'*

*मैले भनेँ, 'मान्छे मार्ने औषधी छैन ?'*

*उसले भन्यो, 'मान्छे मार्ने औषधी मैले बेच्नै पर्दैन । त्यो त पसल पसलमै पाइन्छ ।'*

*'कुन पसलमा पाइन्छ ?' मैले हठात् सोधेँ ।*

*'सबै पसलमा पाइन्छ,' उसले भन्यो, 'तपाईं यो बजारको जुनसुकै पसलमा गएर जेसुकै खानेकुरा किन्नोस्, त्यसले मान्छे मारिरहेकै हुन्छ । एकैचोटी मार्दैन, तर विस्तार विस्तारै मारिरहेको हुन्छ ।'*

*'कस्तो खानेकुरा भाइ ?'*

*'जे पनि । तपाईं तरकारी किन्नोस् त्यसमा रासायनिक मल हालिएको हुन्छ, त्यसले मान्छे मारिहाल्छ । फलफूल किन्नोस्, त्यसमा इन्जेक्सन ठेलिएको हुन्छ, त्यसले पनि मान्छे मारिहाल्छ । दाल-चामल किन्नोस्, त्यसमा पालिस हालेर टल्काइएको हुन्छ, त्यसले मान्छे मारिहाल्छ । जंक फुड किन्नोस्, त्यसले झन् मान्छे मारिहाल्छ । रोटी किन्नुस् तेलले मान्छे मार्छ, मिठाइ किन्नोस् घिउले मान्छे मार्छ । अहिले बजारमा मान्छे नमार्ने खानेकुरा केही पनि छैन ।'*

*भाइको कुराले म झस्केँ ।*

*उसले फेरि भन्यो, 'हैन त दाइ ? मान्छे मार्ने औषधी अहिले पसल पसलमै यस्तोविधि किन्न पाइन्छ भने मैले किन बेच्नुपऱ्यो ? म त चुपचाप मुसा मार्ने, उडुस मार्ने, मच्छर मार्ने औषधी मात्रै बेच्छु । तपाईंलाई मुसा मार्ने औषधी चाहिँदैन ?'*

# किन र कसरी चुनाव हारे दाहाल कमरेडले ?

नेपाल कम्युनिष्ट पार्टी (एमाले) को बागमती प्रादेशिक कमिटी निर्वाचनमा मतका आधारमा कैलाश ढुंगेलसँग पराजित भए पनि कृष्ण दाहालले मनको आधारमा जितेसरह भएको दावी गरिएको छ । अध्यक्ष खड्गप्रसाद ओली र महासचिव शंकर पोखरेलले उम्मेदवारी फिर्ता लिन दबाब दिए पनि दाहाल मैदानमै अडिएका थिए । पराजित भए सँगै पुराना कार्यकर्ता दाहालको राजनीतिक करिअर धरापमा परेको छ । केन्द्रीय सदस्य पद पनि गुमेको छ । २०४८ सालको चुनावमा कमल थापालाई हराएर कान्छो सभासद्को रुपमा दाहालले राम्रै चिनारी बनाएका थिए । यसपटक पनि स्वतन्त्र तवरबाट चुनाव भएको भए उनले ढुंगेललाई सहजै जित्थे भन्नेहरू थुप्रै छन् । किनभने अध्यक्ष ओली र केयौं नेताहरू ढुंगेलको पक्षमा लागे पनि २५७ मतको अन्तरले मात्रै चुनाव हारे । जम्मा ११३५ मत खसेकोमा विजेताले ६९६ र पराजितले ४३९ प्राप्त गरेका थिए ।

केही दिन अघिसम्म दाहाललाई जिताउन कम्मर कसेर लागेका र एकताका अध्यक्ष ओलीको विश्वासिला गोकुल बाँस्कोटाले अन्तिम समयसम्म दबाब थाम्न नसकेपछि दाहाल एक्लै मैदानमा ओर्लिएको बताइन्छ । दाहालसँग अध्यक्ष ओलीले चित्रगुप्तको जस्तो हिसाब निकाल्नुको खास कारण नेकपा विभाजनताका निकालेको वक्तव्य हो भनिएको छ । त्यसबेला दाहालले पार्टी विभाजनले कसैको हित गर्दैन भनेर स्वतन्त्र बस्ने मनशाय व्यक्त गरेका थिए । अध्यक्ष ओलीले अहिले आएर विभाजनका बेला साथ नदिनेलाई किन नेता बनाउने भनेपछि बाँस्कोटाहरू हच्किएको हुनुपर्छ । अर्को कारण हो- मकवानपुरको अध्यक्षमा दाहालले बद्री लम्सालको नाम अघि सार्नु । त्यसमा ओलीले एकलाल श्रेष्ठलाई अध्यक्ष र बद्री लम्साललाई सचिव बनाए भैहाल्यो नि, के को गलफत्ती गरेको भनेका थिए । दाहालले पनि त्यसो भए तपाईं महासचिव बसेर शंकर पोखरेललाई अध्यक्ष बनाए भइहाल्यो नि भन्ने जवाफ दिएको सम्झनेहरू हेटौंडातिर भेटिएका छन् । यी दुवै कारणले गर्दा दाहाललाई प्रदेश अध्यक्षका हिसाबले पोलिटब्युरोमा ढिम्किन नदिन अध्यक्ष ओलीले प्रत्यक्ष भूमिका खेलेको बताइन्छ । अहिलेको चुनावमा मकवानपुरका एमाले नेताहरू अनन्त पौड्याल, डोरमणि पौड्याल, महेश बर्तौला र बद्री लम्साल खुलेरै कैलाश ढुंगेलतिर लागेका थिए । र, हारको समीक्षा गर्दा विशेष गरी दाहाललाई लम्सालले धोका दिएको निष्कर्ष निकालिएको बताइन्छ । १० भाइ पक्षधर भनी चिनिएका चितवनका कृष्णभक्त पोखरेललाई अध्यक्ष ओलीले पहिलादेखि नै बक्रदृष्टि राखेका थिए । शेरबहादुर तामाङको कानुनमन्त्रीबाट राजीनामासँगै अध्यक्ष ओलीले उनलाई बालुवाटारमा मैलाई कहिलेकाहिँ क्रस गर्छौ, त्यसैले मन्त्री बन्न हतार नगर समेत भन्न भ्याएका थिए । यसरी एमालेभित्र ओलीलाई क्रस गर्न नपाइने अवस्था विद्यमान छ ।

वाग्मतीको चुनावमा कैलाशको जित सुनिश्चित गराउन अध्यक्ष ओलीले केशव पाण्डेलाई फिर्ता लिन लगाएका थिए । प्रदेश सभाका पूर्वसभामुख सानु श्रेष्ठ भने दाहालको पक्षमा देखा परेका थिए । रामेछापका केशर बुढाथोकीलाई पनि ढुंगेलको समर्थनमा उम्मेदवारी फिर्ता लिन लगाइएको थियो । उनी र ढुंगेल एउटै वडाका हुन् । श्रेष्ठ उठ्नुको मुख्य कारण दाहाललाई जिताउनलाई हो भन्ने कुरा बुझेपछि अध्यक्ष ओलीले शंकर पोखरेललाई अह्रनखटन गरी मध्यराति बालकोट पुऱ्याउन लगाएको र त्यसपछि मात्रै उम्मेदवारी फिर्ता हुनुका साथै फिर्ता गर्ने समय एक दिन पछि धकेलिएको थियो ।

बागमतीको चुनावमा अध्यक्ष ओली र महासचिव पोखरेलनिकट ढुंगेल समूहका दावा दोर्जी लामाले उपाध्यक्ष र सचिवमा पूर्व डिआईजी नवराज सिलवालले १ मतले जितेका छन् । १० भाइ समूहका नारायण खतिवडासहित इश्वरचन्द्र पोखरेल र सुभाषचन्द्र ठकुरी भने पराजित भएका छन् । सचिव पदमा सिन्धुपाल्चोकका पुराना नेता हस्तबहादुर पण्डित सिलवालसँग एक मतको अन्तरले मात्रै पराजित भएका हुन् । सिलवालले ५६८ मत पाएका थिए ।

एमालेमा बढ्दो खिचलोका कारण कोशी, बागमती, कर्णाली र गण्डकीलगायतका प्रदेश समितिहरूको अधिवेशन समयमा शुरु हुन सकेनन् भने सबै अधिवेशन लम्ब्याउने र सहभागीहरूलाई गलाउने नीति लिएको देखिन्छ ।

यसैबीच एमाले समर्थित पेशागत महासंघको केन्द्रीय अधिवेशन असोज १९ र २० गते काठमाडौंमा हुने भएको छ । नेतृत्वका लागि भोला पोखरेल, पुण्य पौडेल र केदार देवकोटा प्रतिस्पर्धाको तयारीमा छन् । अहिलेका संयोजक प्रेमकुमार पराजुलीलाई चुनौती दिने मनशायका साथ कतिपयलाई प्रतिनिधि बनाइएको दाबी स्रोतले गरेको छ । त्यसैगरी अडानका अध्यक्ष मोहनराज जैसी पनि पेशागत महासंघको अध्यक्ष पदमा दावेदारी गर्दैछन् ।

# प्रोजेक्ट ल्याउन पञ्चायतले सक्ने, गणतन्त्रले नसक्ने ?

**विराट अनुपम**



आठ दिने चीन भ्रमण सकेर प्रधानमन्त्री प्रचण्ड शनिबार स्वदेश फर्केका छन् । चीनले दिएको गार्ड अफ अनर, सिसँग डेलिगेसन तहको भेटघाट र चिनियाँ अखबार ग्लोबल टाइम्सको दुई पेज लामो अन्तर्वार्ता हेर्दा भ्रमण गज्जब भएको लाग्न सक्छ । तर, भ्रमण त्यो स्तरको हुन सकेन जुन स्तरको प्रचार प्रधानमन्त्रीस्वयंले गरेका थिए । न चीनसँग बिजुली व्यापार हुने वाचा पूरा भयो । न किमाथांका नाका खोल्ने काम भयो । चीनले चाहेको बिआरआई परियोजनाको ठोस कदम पनि अगाडि बढेन । हाङ्चौको खेलकुद मेलादेखि कैलाशपर्वतको तीर्थाटनसम्म फैलिएको भ्रमण सकेर प्रधानमन्त्रीले १९ तोपको सलामीको कुरा जोडतोडले गरे । संयुक्त विज्ञप्तिमा नआएको चुच्चे नक्साको कुरा पनि गरेको भनेर मिडियामा समाचार बनाए । यी सतही कुरा हुन् । मूलत: नेपाली नेतृत्व र चिनियाँ नेतृत्वको बीचमा विश्वासको वातावरण देखिएको छैन ।

सन १९६१ मा राजा महेन्द्र चीन जाँदा कोदारी राजमार्ग बनाउने समझदारी र दुई वर्षभित्रै सन् १९६३ बाट काम शुरु भयो । सन् १९६७ मा आएर त राजमार्ग शुरु नै भयो । यो नेपाल र चीन जोड्ने बाटो मात्रै थिएन बरु शताब्दीऔँ पुराना दुई देश जोड्न हिमाल पार गरेर आएको पहिलो मेगा प्रोजेक्ट थियो । सन् १९७० को दशकमै चीनले काठमाडौँ-मुग्लिन-नारायणघाट राजमार्ग बनायो । यो झट्ट हेर्दा विशाल चीनले बनाएका दुई राजमार्गजस्तो मात्रै लाग्न सक्छ । त्यो बेला चीनको विश्व आर्थिक मञ्चमा कुनै दरिलो उपस्थिति थिएन । ऊ अहिलेजस्तो अमेरिकासँग ट्रेड वार गर्ने तहको दोस्रो ठूलो अर्थतन्त्र थिएन । अहिलेको जस्तो न्यू डिभेलपमेन्टदेखि एशियाली पूर्वाधार लगानी बैंकको मुख्यालय हुने देश थिएन । चीनको गरिबी अहिलेजस्तो उन्मूलन भएको थिएन । उसले अहिलेजस्तो पूर्वाधारमा क्रान्ति गरेको थिएन । त्यो बेलाको चीनले एकै दशकमा नेपाललाई त्यो समयका दुई मेगा प्रोजेक्ट दिएको थियो । यसमा न भूराजनीतिले रोक्यो । न नेपालको आर्थिक हैसियतले नै ! अहिलेजस्तो नेपाली प्रतिव्यक्ति आय नभएको र पर्याप्त दक्ष जनशक्ति नभएको त्यो युगमा पनि यस्ता मेगा परियोजना आउनु सामान्य विश्वासको कारणले सम्भव हुने कुरा थिएन ।

अहिले त्यो अनुपातमा झन् ठूला परियोजना दिनुपर्ने हो । दक्षिण एशिया छिराउने राजमार्ग राजीखुशी तत्काल बनाउने चीनले दक्षिण एशिया छिर्ने रेल नेपाली हितमा बनाउनुपर्ने हो । तातोपानी नाका दशकौँअगाडि सडकले जोड्ने चीन अहिले नेपालसँगका सबै नाका खोलेर दक्षिण एशियाली भूजडित देशतिर चिनियाँ बजार दिन आउनुपर्ने हो । नेपाली पक्षले चीनको विश्वास जित्न नसकेरै यस्तो हुन नसकेको हो । आज अफ्रिकामा चिनियाँ पूर्वाधारले परिवर्तन आएका छन् । इण्डोनेशियामा रेल बनेर दुई ठूला सहर जोडिएका छन् । चीनमा मुख्यालय भएको एशियाली पूर्वाधार लगानी बैंकबाट भारतले मनग्गे फाइदा दिएको छ ।

**त्यो बेलाको चीनले एकै दशकमा नेपाललाई त्यो समयका दुई मेगा प्रोजेक्ट दिएको थियो । अहिले त्यो अनुपातमा झन् ठूला परियोजना दिनुपर्ने हो ।**

नेपाल त्यो फाइदा लिने मामिलामा धेरै पछि परेको छ । पर्यटन, पूर्वाधार, लगानी, व्यापारदेखी उद्यममा चीनले विश्वलाई चकित बनाउने कदम चालिरहेको छ । त्यही चीनको १४१४ किलोमिटर बढि सँधियार भएको नेपाल भने त्यसको देखिने क्रान्तिकारी विकास गर्नमा पछि परेको छ । एक ढंगले भन्दा महेन्द्रले दलविहिन पञ्चायतमा जुन स्केलको चिनियाँ लगानी ल्याउन सके अहिलेको उन्नत लोकतन्त्र भनेर दाबी गरिएको संघीय लोकतान्त्रिक गणतन्त्र नेपालले त्यो स्तरको लगानी र विकास ल्याउन सकेको छैन । नयाँ सरकार बनेर चीन पुग्ने भ्रमण र भेटघाट गरेर समाचार बनाउने । सम्झौता गर्ने । तर, गम्भीरपूर्वक कार्यान्वयन नगर्ने । यो चक्रव्यूहमा नेपाली सत्ताका खेलाडी एकपछि अर्को गर्दै चलिरहेका छन् । त्यसका सबैभन्दा ताजा उदाहरण प्रधानमन्त्री प्रचण्ड हुन् । चीनको सूत्र ल्याएर नेपालीलाई गरिबीबाट उन्मुक्ति दिन नेपालले सकेन । चिनियाँ विशाल बजारमा नेपालको सबल निर्यात पुऱ्याएर व्यापार घाटा कम गर्न सकेन । चिनियाँ पूर्वाधारमा भएका विश्वकै क्रान्तिकारी छलाङ्बाट हरेक प्रदेश र स्थानीय तहमा परिवर्तन ल्याउन सकेन । करोडौँ पर्यटक विदेश जाने चीनका दश लाख पर्यटक पनि तान्न सकेन । चीनका खर्चपतिहरूलाई पर्यटकदेखि लगानीकर्ताको रूपमा नेपाल सुगम गन्तव्य बन्न सकेन । विश्वकै उत्कृष्ट ५० सूचीमा रहेका विश्वविद्यालयदेखि चीनको अन्तरिक्ष कार्यक्रम हुँदै खेलकुदका विकासको देखिने फाइदा लिन सकेन । चीनमा मुख्यालय भएका विश्व मञ्चहरूमा देखिने शीर्ष पदमा पुग्न नेपालले सकेन । यो सबै हुनुमा विश्वासकै अभाव छ । कथित भूराजनीतिक दबाब र प्रभावका नाममा सँधियाली देशको शताब्दीऔँ लामो सम्बन्धको एक-एक हिस्साको फाइदा लिन नेपालले सकेन । नेपालको समृद्धिको गति लिन चीन नै अचुक औषधि होइन । तर, चीनको सहयोग र सामर्थ्य जोडेर नेपालले समृद्धिका काम अगाडि लाँदा समृद्धिले द्रुत गति पाउँछ । त्यसमा नेपाल हरेक कोणमा चुकेको छ । नेपाली नेतृत्व चुकेको छ । सत्ता र प्रतिपक्षी दुवै चुकेका छन् । आज चीन दुनियाँको दोस्रो ठूलो अर्थतन्त्र हुँदा चीनको सानो छिमेकी देश नेपाल दक्षिण एशियामा अफगानिस्तानपछिको दोस्रो दरिद्र देश हुन विवश छ । आज चीन विश्व खेलकुदको हिमायती हुँदा नेपाल उच्च पदक ल्याउने शिल्प र शिक्षा चीनबाट लिएर दरिलो उपस्थिति जनाउन असक्षम छ । सन १९६० र १९७० को दशकमा चीन कमजोर हुँदा पनि नेपालले जुन स्तरको फाइदा लिएको थियो । जुन स्तरको विश्वास लिएको थियो आज चीन विश्व मानचित्रका हरेक मानकमा एक से एक भएर अगाडि आउँदा त्यसको फाइदा लिने वातावरण र विश्वास लिन नेपाल अक्षम छ । यो आर्थिक, कूटनीतिक, राजनीतिक सबै कोणबाट एक व्यापक लज्जाको कुरा हो ।

# यो डाक्टर कुट्ने र भाइ फुट्ने देश हो



**श्याम रिमाल**

*'बिरामीको सेवा मात्र हाम्रो धर्म*
*कसले बुझिदिने हाम्रा मर्म*
*अस्पतालभित्रै गुण्डागर्दी*
*लजायो होला प्रहरीको बर्दी'*

मुटु दुखेर अस्पताल पुगेको बिरामी पेश मेकर लगाउँदै घर पुगी सोफामा पल्टेर टेलिभिजन हेरिरहेको हुन्छ । सवारी साधनलगायत दुर्घटनामा परी अत्यधिक रगत बगेर मरणासन्न घाइते रगत पाएर आँखा खोल्न थाल्छ । रातबिरात आकस्मिक कक्षमा भर्ना गरिएको दमको रोगी अक्सिजन लगाएपछि स्वस्थ महसुस गर्न थाल्छ । चिकित्सक, उपचार पद्धति, अस्पताल-स्वास्थ्य संस्था नहुँदो हो त संसारमा अनाहक कतिले ज्यान गुमाउनुपर्थ्यो होला ! विज्ञान र प्रविधिको विकाससँगै चिकित्सा क्षेत्रमा आशै नगरिएका प्रगतिहरू भएका छन् । कृत्रिम श्वासप्रश्वासबाट जीवन बचाइदिने, मुटु फेर्ने, बाइपास सर्जरी, प्लास्टिक सर्जरी, अङ्गप्रत्यङ्ग प्रत्यारोपण, शरीरका भित्री अङ्गहरूको सूक्ष्म तरिकाले एक्स-रे गर्ने, नयाँ नयाँ भाइरस-रोगहरूसँगै खोप पत्ता लगाउने, टाढाका बिरामीलाई टेलिप्याथी उपचार माध्यमबाट रोग पत्ता लगाउने र सल्लाह दिनेजस्ता अनगिन्ती सफलता प्राप्त हुनुका साथै कुनै राष्ट्रको सरदर आयुमा बढोत्तरी भइरहनु स्वास्थ्य क्षेत्रकै देन र विकास हुन् ।

तथापि नेपाल र अन्य देशका विभिन्न अस्पतालमा चिकित्सक तथा स्वास्थ्यकर्मी बारम्बार कुटिँदै छन्, साङ्घातिक आक्रमणमा परेका छन् । पछिल्लो समय कास्की, पोखराको मणिपाल अस्पताल, ललितपुरको पाटन अस्पताल, लमजुङ, सुर्खेत, कञ्चनपुर, मकवानपुरको हेटौँडा अस्पतालमा चिकित्सकमाथि आक्रमण तथा अस्पताल तोडफोड भएकामा आइतबार काठमाडौँ, सिनामङ्गलस्थित काठमाडौँ मेडिकल कलेज (केएमसी) मा डक्टर कुटिएका छन् । दोषीलाई कारवाही गरिने भनी गृह मन्त्रालय र आन्दोलनरत चिकित्सकबीच शनिबार सहमति भएको २४ घण्टा नबित्दै आइतबार केएमसीमा इन्टर्न गरिरहेका चिकित्सक कुटिए र स्वास्थ्यकर्मीलगायत पानीमा रुझ्दै विरोधमा उत्रे । बिरामीको उपचारमा लापरबाही भएको आरोप लगाउँदै तिनका आफन्त चिकित्सकमाथि हिंसामा उत्रनु कत्तिको जायज हो, यस प्रश्नको जवाफ खोजिनुपर्छ । अब मुलुकलाई शिक्षक, प्राध्यापक, चिकित्सक कुटिने देशका रूपमा परिचित गराइनुहुन्न ।

बिरामीको उपचारमा लापरबाही वा हेलचेक्र्याइँ गरेको आरोपमा तिनका आफन्तले कुटपिट गर्ने घटना नेपालमा बहुदलीय व्यवस्थापछि शुरु भएको जस्तो लाग्छ । मानिसहरू अलि शिक्षित, जान्नेसुन्ने पनि हुन थाले, रोगका प्रवृत्ति, अस्पताल व्यवस्थापन र चिकित्सकीय सेवाको गुणस्तरबारे ज्ञान बढ्यो, अन्याय नसहने प्रवृत्ति जाग्यो, मिडियाहरू बढ्न थाले । चिकित्सकहरू यस्ता घटनामा राजनीतिक दलका भ्रातृ सङ्गठन संलग्न रहेको र हिंसामा उत्रनेहरूलाई राजनीतिक संरक्षण पनि रहेको बताउँछन् । संयुक्त राज्य अमेरिकामा गरिएको एक अध्ययनले त्यहाँको अस्पतालमा हुने बिरामीको कूल मृत्युको एक तिहाइ चिकित्सकीय रोकथाम गर्न सकिने अर्थात् कुनै न कुनै चिकित्सकीय त्रुटिकै कारण हुने गरेको देखाउँछ । भारतमा प्रत्येक वर्ष ६० लाख बिरामीको मृत्यु चिकित्सकीय लापरबाही, हेलचेक्र्याइँ वा कुनै त्रुटिका कारण हुने गरेको छ ।

उपचारमा मानवीय त्रुटि हुन सक्छ । एक वार्डमा व्यस्त डाक्टरले अर्को वार्डका बिरामीलाई हेर्न समय लाग्न सक्छ । अन्तिमावस्थामा मात्र बिरामी अस्पतालमा ल्याइएको हुन सक्छ । डाक्टर भनेका भगवान् नै होइनन् जसले छुनेबित्तिकै मर्नै लागेको व्यक्ति तुरुन्त होसमा आउने, आँखा खोल्ने, तन्दुरुस्त हुने होइन । अस्पताल वा स्वास्थ्य संस्थामा जनशक्तिको स्थिति, उपकरणको अवस्था, स्वास्थ्योपचार पद्धतिको प्रयोग र पहुँच, चिकित्सक वा स्वास्थ्यकर्मीको अध्ययन वा ज्ञान वा अनुभवको स्तर, घाइते वा बिरामीको रोगको चरण आदि अनेक आधार हुन् जसबाट मात्र रोगीको रोगोपचार भई सकुशल स्थिति वा घरमा आराम गरेर-औषधि सेवन गरेर-व्यायाम गरेर आदि तरिकाबाट पुन: पहिलेकै स्थितिमा आउन सक्ने विश्वास गरी चिकित्सक-अस्पतालले घर फर्काइन्छ । यो बेग्लै कुरा हो वा अपवादका घटना हो, अस्पतालमा अब यो मान्छे बाँच्दैन भनेकामा घाटे वैद्यले निको पार्नु वा मरेको भनिएको मान्छे चितामा सल्बलाउन थाल्नु वा क्यान्सर जस्तो रोग बिसेक भएर बिरामी लामो समय बाँच्नु । आफ्नो पढाइको ज्ञान प्रयोग गर्दा सबै सफल हुँदैनन् र त खप्तड बाबा जस्ता पूर्वचिकित्सक दिव्यज्ञान प्राप्त गर्न हिमालतिर ध्यान, तपस्या गर्न जान्छन् ।

मुलुकमा शिक्षा क्षेत्रजस्तै स्वास्थ्योपचारमा पनि व्यापारीकरण अति नै बढेको छ । सामान्य रोग जाँच र उपचारमा पनि बेसी रकम असुल्ने, बढीभन्दा बढी जाँच गर्न लगाउने, सरकारी चिकित्सक आफ्नो अस्पतालभन्दा निजी क्लिनिक र स्वास्थ्य संस्था धाउने, मर्नै लागेको बिरामीलाई उपचार गर्ने बहानामा धेरै दिन राखेर वार्ड र उपचारको पैसा असुल्ने, नर्स आदिले एकको नवजात शिशु अर्कालाई दिने आपराधिक प्रवृत्ति जस्ता अनेक दुष्कृति यस क्षेत्रमा छ । नक्कली सर्टिफिकेटबाट डाक्टर बन्नेहरूको ठूलो सञ्जालले पनि यस क्षेत्रलाई अविश्वासरहित बनाइदिएको छ । बिरामीका आफन्तलाई क्षतिपूर्तिका नाममा रकम दिइहाल्ने र तिनलाई उचालेर प्राप्त रकमको अंश आफूले लिने कुनै समूहको प्रवृत्ति त झन् खतरनाक छ ।

समाजवादोन्मुख भनिएको देशमा शिक्षा र स्वास्थ्य क्षेत्रलाई विस्तारै समाजवादीकरण गरिनुपर्नेमा झन् झन् महँगो भई गरिबका छोराछोरीले पढ्न नपाउने र विपन्नले औषधि, अस्पताल र डाक्टरको समेत मुख देख्न नपाई ज्यान गुमाउनुपर्ने स्थिति छ । जनताले जनप्रतिनिधिलाई मतदान गर्ने तर सरकारले तिनको स्वास्थ्यमा फिटिक्क ध्यान नदिने पनि समाजवादी सरकार हुन्छ ? रोग भन्ने कुरा त आफैँले जानीबुझी निम्त्याएको होइन नि ! पैसा हुनेले मात्र बाँच्न पाउने नियम हो भने रोगीहरूलाई संसारबाट बिदा दिए भइगयो नि त ! विपन्नलाई असाध्य रोग लाग्नेबित्तिकै परमधाम जानुपर्ने स्थिति सरकार-राज्यले टुलुटुलु हेरिरहन सुहाउँछ ? कोरोना महामारीका बेला सर्वसाधारण जनताले अक्सिजन नपाएर बिदा हुनुपरेको घटना साक्षी छ । नेता-सरकारका पदाधिकारीले मात्र विदेशका महँगो उपचार पद्धतिबाट बाँच्न पाउने नियम तोडिनैपर्छ । अनि अहिले डाक्टर कुटिने यस देशीय रोगलाई सदा अन्त्य गर्नका लागि जनजागरण आदिबाट स्वास्थ्य सेवालाई मर्यादित, सुरक्षित, भयरहित, हिंसारहित बनाई निर्बाध रूपमा सेवा प्रवाह गर्ने वातावरण तयार गर्न राज्य, निजी सङ्घसंस्था तथा बिरामीका आफन्त संयुक्त रूपमा लाग्नुपर्छ ।

# कारागारको दुरावस्था र दफा १५५



**• अनन्त डुम्रे**

नेपालको कारागारमा क्षमताभन्दा धेरै कैदी रहेको र त्यसमा न्यूनतम मानवीय सुविधा पनि उपलब्ध हुन नसकेको समाचार दिनहुँजस्तो अखबारमा देख्न र सुन्नमा आउने गरेको छ । अझै पनि राणाकालीन कारागारको संरचनालाई विस्थापित गर्न सकिएको छैन । कारागारको पूर्वाधारलाई हेर्दा जम्मा १६ हजार ५ सय ११ जना कैदीबन्दीलाई मात्रै राख्न सकिने क्षमता छ भने कैदीबन्दीको संख्याचाहिँ २७ हजार ९ सय ५० जना रहेको पाइन्छ । तत्काले भौतिक पूर्वाधार तयार गरी यसलाई समाधान गर्न सकिने अवस्था छैन ।

विभिन्न देशमा कैदीबन्दीको व्यवस्थापन गर्ने सन्दर्भमा सशर्त रिहाई, समुदायमा काम गर्न पठाउनेलगायतको व्यवस्था गरेको पाइन्छ । साविक मुलुकी ऐनको दण्ड सजायको महलको दफा ११ मा ऐनमा कैद भनी लेखिएको कलमका कैद हुन्छ' भनी लेखिएको थियो । मुलुकी ऐनमा भएको नवौं संशोधनपश्चात् दफा ११ क थप गरियो । त्यसमा देहाय दफा (१) मा मुद्दा डिसमिस गराएबापत कैदको सजाय भएकोमा त्यस्तो कैदको दिनको पच्चिस रुपैयाँका दरले बुझाएमा रकम बुझी लिई लगत कट्टा गरिदिनुपर्ने व्यवस्था गरियो भने देहाय दफा (२) मा दफा ११ मा जुनसुकै कुरा लेखिएको भए पनि तीन वर्षभन्दा कम कैदको सजाय हुने कसुर पहिलोपटक गर्ने व्यक्तिलाई कैदमा राख्न मनासिव नठहऱ्याएमा एक दिनको पच्चीस रुपैयाँका दरले हुन आउने रकम बुझाएमा कैदको लगत कट्टा गरिदिनुपर्छ भन्ने उल्लेख भयो । त्यसरी फैसला गर्दा अब उप्रान्त त्यस प्रकारको कुनै कसुर अपराध गर्ने छैन भन्ने कागज गराउनुपर्ने र तीन वर्षभित्र कैदको सजाय हुने कुनै कसुर गरेमा कसुरदारलाई पहिलेको कैदसमेत थप सजाय गरी कैदबापत बुझाएको रकम फिर्ता गर्नुपर्ने व्यवस्था देहाय दफा (३) मा गरेको पाइन्छ । बहुविवाहको महलको १० नम्बरबमोजिम सजाय हुनेमा भने ऐनको उक्त व्यवस्था लागू नहुने बन्देज देहाय दफा (४) मा गरिएको छ ।

साविक मुलुकी ऐनलाई विस्थापित गरी २०७४ सालमा जारी भएको मुलुकी अपराध (संहिता) ऐनमा साविक मुलुकी ऐनमा भएको उपर्युक्त कानुनी व्यवस्थासँग मिल्दोजुल्दो व्यवस्था फैसला कार्यान्वयनसम्बन्धी व्यवस्थाअन्तर्गतको दफा १५५ मा गरेको पाइन्छ । उपदफा (१) मा कसुरदारको उमेर, कसुरको गम्भीरता, कसुर गरेको तरिका र आचरणसमेतलाई विचार गर्नुपर्ने आधारसमेत उल्लेख भएको छ भने साविकको तीन



वर्षलाई एक वर्ष वा सोभन्दा कम कैदको सजाय भएको भनेर कैद सीमा घटाइएको छ । त्यसरी जम्मा भएको रकमको ५० प्रतिशत पीडित राहत कोषमा जम्मा गर्नुपर्ने थप व्यवस्था छ । साथै विदेशी नागरिकको हकमा दफा १५९ को उपदफा (४) मा उल्लेखित कसुरमा यो व्यवस्था लागू नहुने बन्देज गर्नुका साथै दैनिक रकम पनि तीन सयको बदला पाँच सय कायम गरिएको छ । त्यस्तो विदेशीलाई सात दिनभित्र अध्यागमन कार्यालयले अदालतको आदेशअनुसार नेपालबाहिर पठाउनुपर्नेसमेतको थप व्यवस्था उपदफा (५) र (६) मा गरिएको छ ।

साविक ऐनमा जस्तो यसमा नेपाली नागरिकको हकमा कुनै बन्देज लगाएको पाइँदैन । तर, विदेशी नागरिकको हकमा भ्रष्टाचारलगायत १० वटा मुद्दामा सो व्यवस्था लागू नहुने प्रष्ट छ । यो अपराधसंहितामा पहिलेभन्दा प्रगतिशील व्यवस्था गरिएको भए पनि कैदको हकमा भने अनुदार छ । त्यस्तो गर्नुपर्नाको कुनै तर्कसंगत आधार र कारण देखिँदैन । कतिपय मुलुकहरू कारागार र कैदीविहीन राज्य बनाउनेतर्फ लागिसके भने हामी अपराध हुने आधार, कारण पत्ता लगाई त्यसको निराकरण गर्नेतर्फ भन्दा पनि जस्तालाई तस्तै बदलाको भावले गरिने पुरातनपन्थी दण्ड सजायको सिद्धान्तको अवशेष बोकी हिँडेको जस्तो देखिन्छ । जुन बिल्कुल समयसापेक्ष होइन ।

नेपालमा बढ्दो जनसंख्या र आपराधिक गतिविधिको कारण कैदीबन्दीको चाप एकातिर छ भने अर्कोतर्फ भइरहेको ऐनको प्रयोगमा पनि दिन परदिन संकुचन हुँदै छ । यदि कुनै न्यायाधीशले अलि उदार दृष्टिकोण राखी दफा १५५ को प्रयोग गऱ्यो भने लौन के-के न भयो भनेझैं गरी नियमनकारी मात्र होइन, सार्वजनिक सञ्चारमाध्यमसमेत न्यायाधीशहरूमाथि खनिन थाल्छन् । परिणामत: न्यायाधीश कोपभाजनमा पर्ने गरेका थुप्रै परिघटना हाम्रोसामु छन् । शायद त्यसै कारणले नेपाली नागरिकको हकमा १५५ सँग नजोडिएको दफा १५९ को व्यवस्था अघि सारेर वा आदेश भनेको फैसला नै हो भन्ने व्याख्या गरी रकम दिए लिई कैदको लगत कट्टा गरिदिनू भनी फैसलामा नै उल्लेख हुनुपर्छ भन्नेजस्ता तर्कसहित सो दफाको सुविधा दिने कुरामा न्यायाधीशहरू अनुदार रहने गरेको पाइन्छ । जसको कारण उक्त दफाको भावना र मर्म प्रतिदिन मर्दै जान थालेको छ । नियमनकारी निकायले यस्ता कुरामा निर्धक्क भएर ऐनको प्रयोग गर्नुहोस्, सो दफा प्रयोग गरेको कारणले मात्रै कोपभाजनमा पर्नु पर्दैन भन्ने विश्वास नदिलाएसम्म यसमा सुधार हुने देखिँदैन । भर्खरै मात्र सर्वोच्च अदालतले बालविवाहसम्बन्धी मृतप्राय: भएको दफालाई पुनर्जीवित गर्ने गरी एउटा फैसला गरेको छ, जुन समयसापेक्ष र सान्दर्भिक छ ।

यस विषयमा पनि सर्वोच्च अदालतबाट समय सापेक्ष व्याख्या गरी दिशानिर्देश गर्नु नितान्त जरुरी भइसकेको छ । यसबारे सम्बद्ध निकायका पदाधिकारीहरूमा समय सापेक्ष चिन्तनको विकास हुनु मुलुककै लागि हितकारी हुनेछ ।

*(लेखक उच्च अदालतका पूर्वन्यायाधीश हुनुहुन्छ ।)*

# सुन तस्करीमा भारतमा पक्राउ, नेपालमा नक्कली नागरिकता

उपत्यकासँग जोडिएको काभ्रेपलाञ्चोक जिल्ला सुन तस्करी प्रकरणको अनुसन्धान शुरु भएदेखि नै चर्चामा छ । तत्कालीन प्रजिअ कृष्ण राउत (हालका सञ्चार सचिव) ले जिल्लाबाट अनुसूची विनाका नागरिकता बिक्री भएको गोप्य सूचनाका आधारमा गरेको अनुसन्धानले पूर्णता पाउन सकेकै छैन ।

३ सय ५० वटा त्यस्ता नागरिकता बिक्री भएको प्रतिवेदन तत्कालीन गृहसचिव तथा हालका अख्तियार प्रमुख आयुक्त प्रेमकुमार राईकोमा पुगेकामा त्यतिबेला खासै कारवाही हुन पाएन । अहिले आएर सुन तस्करीमा त्यही बेला बिक्री गरिएका नागरिकता प्रयोग भएको फेला परेको छ । त्यस्ता ६ जना विदेशी तस्करले काभ्रेबाट नागरिकता र राहदानी लिएको तथ्य भेटिए पनि सरकारले नागरिकता रद्द गरेको छैन । दावा छिरिङ्ग भनिने निमा तामाङको नागरिकता रद्दका लागि जिल्ला प्रशासन कार्यालयले भदौ २२ गते नै गृह मन्त्रालयमा सिफारिस पठाएको हो । हालै भारतीय भन्सारद्वारा समातिएका उमेश योञ्जनका नाममा जारी भएको राहदानी नम्बर १२२३२२८७ हो तर यिनी काभ्रेका हैनन् । राहदानीमा भने काभ्रे जन्मस्थान राखिएको छ । नागरिकता नम्बर ३०३०९१-१७५४ उल्लेख छ । उक्त नागरिकता गृह मन्त्रालयको रेकर्डमा समेत छैन । राहदानी बनाउँदा नागरिकता भिडाउनुपर्ने व्यवस्था भए पनि उनका हकमा त्यस्तो भएको देखिएन । ११ फेब्रुअरी १९८४ अर्थात् २०४० माघ २८ गते शनिबार जन्ममिति राखिएका उमेश २०२१ अप्रिल २६ मा धुलिखेलबाट जारी गरिएको राहदानीका आधारमा विभिन्न देश जाने-आउने गरेका थिए ।

उमेशले लिएको राहदानी र दावाको राहदानी एउटै अवधिमा जारी भएको देखिन्छ । राष्ट्रिय परिचयपत्र अनिवार्य गरिनुअघि तस्करहरूले धमाधम राहदानी र नागरिकता खरिद गरेका थिए । दावाले बयानमा समेत २ लाखदेखि ५ लाखसम्म रूपैयाँ तिरेर घरमै नागरिकता पाउने गरेको बयान दिएका छन् । आफू नेपाली रहेको सिफारिसपत्र




बनाएर भारतीय जेलबाट छुट्न उमेशका मान्छे धुलिखेल धाउन थालेपछि उनी पनि सुन तस्कर रहेको र नक्कली नागरिकता लिएको खुलेको हो ।

२०४३ साल असोज ९ गतेको जन्ममिति र काभ्रेपलाञ्चोक ठेगाना राख्ने सोनाम लामा काभ्रेका हैनन् तर उनको राहदानी २०७८ पुस २१ गते काभ्रेबाटै जारी भएको छ । राहदानी र नागरिकता जारी गर्दाका बखत पेश गरिएका कुनै कागजात जिल्ला प्रशासन कार्यालयको रेकर्डमा छैनन् । उनको नाममा जारी भएको नागरिकता जिल्ला प्रशासन कार्यालय काभ्रेको अभिलेखमा अर्कै व्यक्तिका नाममा देखिएको छ । रामेछाप माइती भई काभ्रेको साविक भीमखोरी गाविस घर भएकी एक महिलाका नाममा ०६३ सालमा जारी भएको नागरिकता नम्बर सोनामले बनाएको राहदानीमा प्रयोग भएको छ ।

नक्कली नागरिकताधारी राम लामाको जन्म २०५३ बैशाख १५ गते राखिएको छ । ठेगाना प्रष्ट छैन । १२५८९४५७ नम्बरको राहदानी लिएका उनको नागरिकता नम्बर ३०३०४१-२२५४ हो । यो जिल्लाको अभिलेखमा नक्कली हो । यस्तो खालको नम्बर काभ्रेबाट जारी भएको नागरिकतामा छैन । सोनामको राहादानी नम्बर १२५८९४५६ र नागरिकता नम्बर ३०३०४२-२२५४ हो । जन्ममिति २०५३ भदौ ७ राखिएको छ । नागरिकता र राहदानीको नम्बर सँगै छ । उनीहरू दुबै जना नेपाली हैनन् । प्रहरीको रेकर्डमा भने सुन तस्कर दावा, सोनाम र रामको मात्रै नागरिकता फेला परेको थियो । अनुसन्धानमा पासाङ र तेञ्जिङ पनि फेला परेका छन् । तेञ्जिङको राहदानी नम्बर ११८८०३१ हो । २०२०-२-२४ अथार्त २०७६ फागुन १२ गते काभ्रेपलाञ्चोक जिल्लाबाट लिएको राहदानीमा २०३९ जेठ २४ गते जन्ममिति राखिएको छ । त्यसमा काभ्रेपलाञ्चोक जिल्ला जन्म स्थान उल्लेख छ । विदेशीलाई नागरिकता बिक्री प्रकरणमा राजनीतिक नेतृत्वको संलग्नता देखिएको छ । यस प्रकरणमा कर्मचारीको संख्या पनि थपिँदै गएको छ ।

**अनुसन्धानका लागि सिफारिस भएका कर्मचारीको विवरण**

प्रमुख जिल्ला अधिकारी- शिवप्रसाद सिंखडा (हाल : सेवा निवृत्त), अधिकृत - भूपेन्द्र पाण्डेय (हाल: प्रमुख प्रशासकीय अधिकृत, रूपन्देही), अधिकृत - झपेन्द्रराज खरेल (हाल: सूचना अधिकारी, मेलम्ची नगरपालिका, सिन्धुपाल्चोक), नायव सुब्बा - रामचन्द्र अर्याल (हाल: सुब्बा, यातायात कार्यालय, गुर्जुधारा), कम्प्युटर अपरेटर - हिराकाजी तामाङ (हाल: वडा सचिव, चौरीदेउराली गाउँपालिका काभ्रे), नायव सुब्बा - रमेश नेपाल, हाल अन्यत्र कार्यालयमा कार्यरत, कम्प्युटर अपरेटर (करार, हाल छाडिसकेको)- गोमा पराजुली, कार्यालय सहयोगी- विष्णु गौतम (हाल सेवा निवृत्त)

***– मोतीराम तिमल्सिना***

# सुदूरपश्चिममा पनि एमालेभित्र चुनावकै चटारो

एमालेको सुदूरपश्चिम प्रदेशमा २१ र २२ गते हुने पहिलो अधिवेशनका लागि प्यानलगत चुनाव हुने भएको छ । अध्यक्ष केपी शर्मा ओली र महासचिव शंकर पोखेल पक्षबाट कमलप्रसाद तिमिल्सेना र स्थायी समिति सदस्य कर्णबहादुर थापाको समर्थनमा कृष्णप्रसाद जैसीको प्यानलबीच चुनाव हुने भएको छ । तिमिल्सेना र जैसी दुबै जना अछामका नातेदार समेत हुन् । सहमति गराएर सर्वसम्मतिबाट अध्यक्ष छान्ने चर्चा पनि छ । तर त्यसो हुने सम्भावना कम रहेको बताइन्छ । जैसीलाई केन्द्रीय समितिमा मनोनित गर्ने र तिमिल्सेनालाई प्रदेश अध्यक्ष बनाउने गरी सहमति खोज्ने प्रयास भइरहेको बताइन्छ । अध्यक्ष र महासचिवका उम्मेदवारलाई हराई छोड्ने प्रयासमा रहेका कर्णबहादुर थापालाई सहमतिमा ल्याउन स्थानीय नेताहरूले प्रयास गरिरहेको बताइन्छ । चुनावै हुने अवस्थामा भने केन्द्रीय तहका प्राय: सबै नेता कमलको पक्षमा उभिने सम्भावना छ । तिमिल्सेनाको समूहबाट बचन सिंह, रणबहादुर चन्द, कालिबहादुर शाही र भागरथी विष्ट पदाधिकारी र जैसीको समूहमा बलदेव रेग्मी, पल्लव भट्ट, जीवन बम पदाधिकारी हुने चर्चा छ ।

केही समयदेखि थापाको सम्वन्ध अध्यक्ष ओली र महासचिव पोखरेलसंग बिग्रेको छ । उनले विद्या भण्डारीलाई अध्यक्ष बनाउनुपर्छ भनेपछि सम्बनन्ध संकटमा परेको छ । थापासँधै ओलीको पक्षमा उभिँदै आएका थिए । अध्यक्ष ओलीले उद्घाटन गर्ने अधिवेशनमा छ सयको हाराहारीमा प्रतिनिधि रहने छन् । अधिवेशनका लागि असोज १५ गते ८८ वटै पालिकाबाट प्रतिनिधि छान्ने कार्यक्रम तय भएको थियो । तर कैलालीको लम्कीचुहा, टीकापुर, गोदावरीलगायत पालिकामा अझै यो काम भएको छैन । एमाले केन्द्रीय सचिव तथा कर्णाली इन्चार्ज लेखराज भट्टको गृहनगर गोदावरीमा मंगलवार आधाले बहिष्कार गरेपछि उनी निकटले मात्रै आफैँलाई मतदान गरिरहेका छन् । धनगढीमा पनि काठमाडौँमा बस्नेलाई प्रतिनिधि बनाएको भन्दै नगर, जिल्ला र प्रदेश कार्यालयमा तालावन्दी गरिएको छ ।

## विश्वको सेरोफेरो



राजेन्द्र स्थापित

# आङ सिरिङ्ग पार्ने त्यस्तो अत्याचार



नानचिङमा जापानी सेनाको प्रवेशलगत्तै वरपरका गाउँमा आतंक मच्चिन थालिसकेको थियो । आतंककारी राक्षसहरू पसेर मान्छे मार्न, झुपडी जलाउन लागे भन्दै रातिराति डसना-ओढ्ने च्याप्दै खेतमा सुत्न जान तम्सिए गाउँलेहरू । तर, केही दिनसम्म पनि साचाउ वेइ गाउँमा जापानी पसेनन् । खेत चिसो हुनाले गाउँले आ-आफ्नो घरमा सुत्न थाले । त्यसरी घर फर्कनेमा चाङ सिउहोङ पनि थिइन् । यसबेला १२ वर्षकी उनका बाजेले परिवारका सबै सदस्यलाई घर फर्काएलगत्तै जापानी सेनाको एउटा टुकडी गाउँ पस्यो । बुट लगाएका अनि दाह्री पालेका । उनीहरू खुला स्थानमा रोकिए । गाउँलेलाई डाके अनि महिला र पुरुष छुट्याए । केही गाउँले उनीहरूको खुट्टा समातेर हामी सैनिक होइनौं भन्दै रोए, कराए । तर सबैलाई घिसार्दै नजिकको खेतमा लगेर गोली हानियो ।

भोलिपल्ट, चाङ बाजेसँगै बसिरहेको बेला एकजना जापानी सैनिक ढोका फोरेर भित्र पसे । उनी 'फूल' (राम्री युवती) खोज्न त्यसरी पसेका थिए । शुरुमा बाजेतिर बन्दुक सोझ्याए । बूढोले 'नाइँ, केही नगर्नू' भनेपछि बन्दुक चाङतर्फ सोझियो । नातिनीको ज्यान खतरामा परेको देखेपछि बूढाले घुँडा टेकेर दया गर्न आग्रह गरे । तर, जापानी उनको कुनै कुरा सुन्न तयार थिएनन् । उल्टो बूढालाई बन्दुकको कुन्दाले घोचे । चाङले 'जे परे पनि मै व्यहोर्छु, तपाईं नकराउनुस्' भनेर बाजेलाई सम्झाइन् । यत्तिकैमा यौनकर्म गर्न तम्सिसकेका सैनिकले चाङलाई घिसार्दै ओछ्यानमा पछारे । लगाइराखेको सुरुवाल तल सारेर चाङको शरीरमाथि चढे । उनलाई अत्यन्त पीडा भयो, उनी रोइन्, छटपटाइन् र अन्त्यमा बेहोश भइन् । होश आउँदा बाजे छाती पिट्दै रुँदै कराउँदै थिए । उनी भन्दै थिए, 'होङ्जी, मैले केही गर्न सकिन ।' चाङ ओछ्यानबाट उठ्न खोजिन् तर सकिनन् । शरीर दुखिरहेको थियो । ओछ्यान रगताम्य थियो । बूढाले नातिनीको दुबै खुट्टा डोरीले बाँधिदिए, किनभने चाङको योनी फाटिसकेको थियो, रगत बगिरहेको थियो । जापानी सैनिकहरू बलात्कारपछि पनि चाङलाई खोज्न उनको घर पुग्थे । घाउ आलै थियो, त्यसकारण बाजेले नातिनीलाई घाँसको चाङभित्र लुकाएर राखे । घाउमा दिनहुँ मल्हम लगाइदिन्थे, सैनिक आएको छनक पाउनेबित्तिकै फेरि घाँसभित्रै लुकाउँथे । सैनिकले घाँसमा बन्दुकको नालले घोचेर चाङलाई खोज्थे । एकपटक बन्दुकको नाल चाङको कान्छी औंलामा पर्‍यो, साह्रै दुख्यो, तैपनि उनी ऐय्या नभनी, सास रोक्दै सहेर बसिरहिन् ।

पछि सैनिकले चाङलाई चिन्न नसकुन् भनेर परिवारले कपाल काटिदिए, केटाको जस्तो लुगा लगाउन दिए । चाङ परिवारका पहिलो सन्तान हुन्, उनले खेतबारीको काममा परिवारलाई सघाउन थालिन् । एकदिन फेरि जापानी सैनिकहरू गाउँ पसे । तिनीहरूमध्येका एक जना उनलाई देखेर चिच्याए 'ओइ फूल केटी ! यता आऊ आऊ ।' उनी यौनजन्य इशारा गर्दै चाङलाई बोलाउँदै थिए । चाङले 'बेवकुफ, म त केटा हो केटी होइन ।' भनेर जवाफ फर्काइन् । चाङको जवाफ सुनेर उनीहरू गलल हाँसे । त्यो दिन उनीहरूले गाउँ नै लुटे । भएभरको कुखुरा र खाद्यान्न लगे । साथै, चाङलाई पनि कुखुरा बोकाएर अघिअघि हिँड्न लगाए । चाङ उमेरले मात्र होइन उचाइ पनि सानै थियो, अनि शारीरिक रूपमा कमजोर । जब उनी सुस्तरी हिँड्न थालिन्, सिपाहीहरूले चिमोट्थे, ढाडमा बन्दुकको नालले घोच्थे । घोचेको कारण पीठबाट रगत बगिसकेको थियो । पछि किन हो कुन्नि उनलाई घर फर्कन दिइयो । पछिपछि पनि परिवारका सबै सदस्य महिनौं दिनसम्म कहिले कता त कहिले कता लुक्दै हिँडे । पछि विस्तारै जनतामाथि अत्याचार गर्ने क्रम कम हुँदै गयो । जनताले राहत महसुस गर्न थाले । चाङ भन्छिन्, 'तर त्यसबेला पनि मारिएका गाउँलेको शव खेतबारीमा जताततै मिल्काइएको अवस्थामा भेटिन्थ्यो ।' जापानी सैनिकको उक्त दुश्कर्मको परिणाम चाङले जीवनभरि खपिन् । सानै उमेरमा गर्भवती बनिन् । छोरा जन्मेको समय झण्डै मृत्युको मुखमा पुगिन् । सुत्केरी गराउनै ३ दिन लाग्यो । त्यसपछि सदाका लागि सन्तान जन्माउन अक्षम बनिन् । भन्छिन्, 'अहिले पनि 'वर्षाको समय योनीमा असाध्यै पीडा हुन्छ, सुत्नै सक्दिन ।'

'चीन जनवादी गणतन्त्रमा परिणत भइसकेपछि बल्ल चाङको बिहे भयो । लोग्नेले पनि जापानी सेनाले नानचिङमा आमसंहार गर्दाताका अत्याचार खेपेका थिए । उनलाई समातेर लगी जबर्जस्ती श्रम गर्न लगाइएको थियो । पछि दुवै जना कम्युनिष्ट पार्टीमा लागे । जापानी सैनिकले नानचिङमा नरसंहार मच्चाउँदा बलात्कारको पीडा सहन बाध्य चाङ पहिलो व्यक्ति होइनन् । त्यो ठाउँमा मात्र कम्तीमा ८० हजार महिलाले बलात्कार सहनुपरेको थियो । तीमध्येका ६५ हजारलाई मारेर फालियो ! जापानले पहिलोपटक मञ्चुरियामाथि सन् १९३१ मा कब्जा जमायो । सन् १९३७ आइपुग्दानपुग्दै चीनको ठूलो भूभाग उसको नियन्त्रणमा गयो । र, सोही वर्षको डिसेम्बरमा नानचिङमाथि पनि कब्जा जमाउन सफल भयो । नानचिङ त्यसबेला चीनको राजधानी थियो । जापानले नानचिङमाथि कब्जा जमाएको ६ हप्तामै २ लाखभन्दा बढीको नरसंहार गरेको थियो । जापानी सेनाले थुप्रै चिनियाँलाई जिउँदै जलायो भने कतिलाई याङत्से नदीमा फालियो । चिनियाँ जनमुक्ति सेनाको एक प्रतिवेदनमा उल्लेख भएअनुसार जापानी अतिक्रमणकारी सेनाले सन् १९३७ डिसेम्बर १२ देखि २१ सम्म एक लाख ९० हजार बन्दी सेना तथा सर्वसाधारणलाई समूहमा उभ्याएर मेसिनगनले भुटेको थियो भने केही सानो समूहमा एक लाख ५० हजारलाई मारेको थियो । हत्याको प्रकृति यति धेरै आततायी कि त्यसको वर्णन गर्न नसकिने खालको थियो । उदाहरणका लागि टाउको गिँडेर, खप्पर फोरेर, छाला काढेर, मुटु कलेजो निकालेर, पानीमा डुबाएर, आगो लगाएर, यौनांग काटेर, शरीर टुक्राटुक्रा बनाएर, योनी तथा मलद्वारमा भालाले रोपेर मार्नुका साथै दूधेबालक र केटाकेटीलाई जिउँदै जलेको घरमा फालिएको थियो । भीरबाट खसालिएको थियो ।

कस्तोसम्म भने जापानी सेना कसले छोटो समयमा धेरै चिनियाँलाई मार्ने भनेर बाजी खेल्ने गर्थे । लेफ्टिनेन्टद्वय तोसिआकी मुकाइ र सुयोसी नोडाबीच २ सेकेण्डबीचमा कसले बढीलाई मार्ने भनेर डिसेम्बर १२ तारिखमा प्रतिस्पर्धा हुँदा मुकाइले १०६ जना र नोडाले १०५ जनालाई तरवार चलाएर मारेका थिए । दोस्रो विश्वयुद्ध समाप्त भएपछि स्वतन्त्र छानबिनबाट जापानी सेनाले नानचिङमा नरसंहार गरेको र एउटै शहरमा एक हप्ताबीच तीन लाखभन्दा बढी मान्छेको हत्या गरेको पुष्टि भएको थियो । जापानले पनि यो तथ्यलाई स्विकार्दै युद्धमा संलग्न सरदारलाई मृत्युदण्डसमेत दिएको थियो । नानचिङमा जापानी सेना सन् १९३७ को डिसेम्बरमा प्रवेश गरी ६ हप्तासम्म आमहत्या, बलात्कार, आगजनी गरी आतंक मच्चाएको थियो । उक्त शहर कब्जा गर्न जापानले १ लाख ५० हजार सेना परिचालन गरेको थियो । नानचिङमा मात्र ३ लाख चिनियाँको ज्यान गएको थियो । ८ वर्ष लामो युद्धमा कूल २ करोड चिनियाँले ज्यान गुमाएका थिए भने ४ लाख ८० हजार जापानी सैनिकले चिनियाँ भूमिमा ज्यान गुमाएका थिए । चीनमाथि कब्जा गर्ने क्रममा जापानले ६ लाखभन्दा बढी सैनिक परिचालन गरेको थियो ।

## कैलाश ढुंगेल पार्टीका भए कृष्ण दाहालचाहिँ कताका नि !

**– हिदम लामा, एमाले नेता मकवानपुर**



*नेकपा एमाले मकवानपुरका उपसचिव हिदम लामा पुरानो सदरमुकाम भीमफेदी र तत्कालीन चिसापानीगढीसहितका ऐतिहासिक क्षेत्र समेटेर निर्माण भएको भीमफेदी गाउँपालिकामा दोस्रोपटक अध्यक्षको रूपमा सक्रिय छन् । २०७४ र २०७९ को स्थानीय निर्वाचनमा आफूविरुद्ध बनेका कांग्रेस र माओवादीको गठबन्धनलाई दुबैपटक उनले असफल पारिदिएका छन् । उनै लामा भर्खरै एमालेको प्रथम बागमती प्रदेश अधिवेशनमा अध्यक्ष पदका प्रत्यासी पूर्वसांसद कृष्णप्रसाद दाहालको प्रस्तावक थिए । प्रस्तुत छ- बागमती प्रदेश र समसामयिक राजनीतिका सन्दर्भमा जनआस्थाका लागि शिवकुमार काशीले गरेको कुराकानीको संक्षिप्त अंश:*

*० तपाईंले प्रस्ताव गर्नुभएका कृष्णप्रसाद दाहाल पराजित हुनुभयो । यो अवस्थालाई कसरी टिप्पणी गर्नुहुन्छ ?*

- अब यो बितिसकेको विषयमा चर्चा नगरौं ।

*० दुई गुट भएर चुनाव भएको भन्ने सुनिन्छ नि ?*

- हामीले नितान्त जनताको बहुदलीय जनवादले अंगकार गरेको लोकतान्त्रिक पाटोलाई जीवित पारेका हौं । तर केही प्रश्न छन्, जसको उत्तर खोजिरहेका छौं । कैलाश ढुंगेल पार्टीको आधिकारिक उम्मेदवार हो भनेर जिल्ला तहमा खटिएका इञ्चार्जहरूले आफ्ना प्रतिनिधिलाई अस्वस्थ हिसाबले निर्देशन दिइरहेको हामीले देख्यौं । हाम्रो प्रश्न, उहाँ आधिकारिक उम्मेदवार हो भने कृष्णप्रसाद दाहाल कमरेडचाहिँ कसको उम्मेदवार हुनुहुन्छ ? हाम्रो पार्टीमा केही समस्या छन् । मझौला कदका केही नेताले आफ्नो महत्वाकाँक्षा पूरा गर्नका निम्ति शीर्ष नेताहरूलाई विभिन्न धुरी बनाएर स्वार्थको रोटी सेक्न खोजिरहेको देखिन्छ ।

*० सहमतिको नाउँमा प्रक्रिया निकै ढिलाइ भए, परिस्थितिलाई अत्यासलाग्दो बनाइयो । अस्वस्थ गतिविधि भए । समयमै निर्वाचन भएको भए कृष्णप्रसाद दाहालले जित्नुहुन्थ्यो भन्ने पनि सुनिन्छ नि !*

- त्यो कुरामा केही सत्यता छ । निर्धारित समयभित्र लोकतान्त्रिक विधिमा हामी गएको भए दाहाल कमरेडले जीत हासिल गर्नुहुन्थ्यो । हामी तमाम प्रतिनिधिहरू ३ दिनका लागि खर्चबर्च बोकेर काठमाडौं पुग्यौं । पट्यार लाग्ने गरी ६ दिनसम्म बस्नुपर्‍यो । यो बीच सहमतिका नाउँमा निकै गिजोल्ने काम भयो । काठमाडौंका अध्यक्ष दिपक निरौला कमरेड र ललितपुरका पुरुषोत्तम कमरेडको सहभागितामा भएका अस्वस्थ गतिविधि मिडियाभरि छरपस्ट छन् ।

*० एउटा थितिमा चल्नुपर्ने अधिवेशनमा अर्का उम्मेदवारलाई पराजित गर्नका लागि भएका अस्वस्थ गतिविधिहरूबारे तपाईंको टिप्पणीचाहिँ के हो ?*

- मदन भण्डारीको फोटो टाँसेको पोशाक लगाएर मैले गुटबन्दी गरेको हुँ भन्दै छाती पिट्ने कमरेडहरूले आफ्नो वडामा कति जना जनप्रतिनिधिलाई जिताउनुभयो ? ३ सय मत कट्यो कि कटेन ? कहिल्यै यसबारे सोच्नुभएको छ ? अनि हामीजस्ता आम कार्यकर्ताले यो प्रश्न उहाँहरूलाई गर्नुपर्छ कि पर्दैन ? के कम्युनिष्ट पार्टीभित्र आलोचनात्मक चेत मरेको हो ? म हिदम लामा आलोचनात्मक चेत भएको मान्छे हुँ । मैले जनताको बहुदलीय जनवादको मर्म र भावना, पार्टीका अनुशासन, विधि, प्रक्रिया बिग्रेको देख्दा सँधै खबरदारी गर्छु । कम्युनिष्ट कार्यकर्ता भएका नाताले सहरकेन्द्रित कमरेडहरूले गरिरहनुभएको बेथितिबारे सार्बजनिक रूपमै धारणा लेखेको छु ।

**३ दिनका लागि खर्चबर्च बोकेर पुग्यौं । पट्यार लाग्ने गरी ६ दिनसम्म बस्नुपर्‍यो । यो बीच सहमतिका नाउँमा निकै गिजोल्ने काम भयो ।**

*० कस्ता कस्ता प्रतिनिधिहरूले कृष्ण दाहाललाई मत हाले त ?*

- म प्रस्तावक रहेको उम्मेदवार, पूर्वसांसद र मकवानपुरे कम्युनिष्ट आन्दोलनका जिउँदा इतिहास कृष्णप्रसाद दाहालले ४३९ मत पाउनुभयो । यो भनेको सबैखाले शक्तिहरूको दुरूपयोग गरेर पनि भड्काउन नसकेको मत हो । यो भूगोलमा बस्ने पैताला पट्पटी फुटेका प्रतिनिधि कमरेडहरूको मत हो । यो मत टोपी फाटेका र श्रम गरेर पसिना बगाउने प्रतिनिधि कमरेडहरूको मत हो । नेकपा एमालेप्रति आशा र भरोसा भएर नियमित लेबी तिरी अधिवेशनमा गरिब, सर्वहारा, मजदुर र पछाडि पारिएका वर्गको प्रतिनिधित्व गरेर ३ दिनको बिदा लिई अधिवेशनमा आउनुभएका बास्तविक कमरेडहरूको मत हो यो ।

*० तर यो अधिवेशनमा तपाईंहरूले अध्यक्ष कमरेड केपी ओलीकै कुरा मान्नुभएन नि ? उहाँले सर्वसम्मत नेतृत्व चुन्ने कुरा गर्नुभएको थियो ।*

- उहाँले सर्वसम्मत नेतृत्व चयन होस्,नभए स्वस्थ प्रतिस्पर्धामा जानु भनेर उद्घाटन सत्रमै भन्नुभएको हो । सोहीबमोजिम अधिवेशन अघि बढेको हो । अधिवेशनमा सहभागी प्रतिनिधिहरूले स्वस्थ प्रतिस्पर्धामा जाने बाटो खोजे । त्यसपछि चुनाव भएको हो । चुनाव हुँदा आदरणीय अध्यक्ष कमरेडको मानमर्दन भएको वा उहाँको निर्देशन नमानेको होइन । यो आवश्यकतामा आधारित कुरा हो ।

*० देशले अबको राजनीतिक मार्ग कस्तो खोजेको छ ?*

- हामीले नयाँ संविधान पाएपछि दुईपटक संघीय, प्रदेश र स्थानीय सरकारको निर्वाचन मार्फत् जनप्रतिनिधिहरू छनौट गर्‍यौं । यो बीचमा नेपालका कम्युनिष्ट पार्टीहरूको एकीकरण प्रक्रिया पनि अघि बढ्यो । तर, यसले लामो समयसम्म आफ्नो हैसियतलाई कायम राख्न सकेन । तत्कालीन नेकपामय अवधिमा अनेकौं गड्बडी र अफठ्याराहरू थिए होलान् । ती सबै अब इतिहास भए । अब फेरि पनि नेपालमा एउटा बलियो कम्युनिष्ट पार्टीको विकल्प छैन । जे जसरी हुन्छ वामशक्तिहरू फेरि एक ठाउँमा उभिएर मुलुकको समृद्धिको ढोका खोल्नुपर्नेछ । त्यसो हुन सकेमा फेरि पनि सुखी नेपाली: समृद्ध नेपालको परिकल्पनासहित नीति, कार्यक्रम, बजेट हासिल गर्न सक्छौं ।

*० तर, कम्युनिष्ट पार्टीहरू पनि त जवान हुन नपाउँदै फुटिदिन्छन्, गुट मौलाइदिन्छ नि !*

- जब पार्टीभित्रको लोकतन्त्र कमजोर हुन्छ । नेताहरूको जवाफदेहितामा खिया लाग्छ । पार्टीभित्र कमिटी प्रणाली सकिन्छ । सुशासन सकिन्छ । राजनीतिक कार्यकर्ताहरूको आलोचनात्मक चेत सकिन्छ । नेताहरू आफूलाई पार्टीको प्राधिकार ठान्न थाल्छन् । त्यही भ्रमबाट कार्यकर्ता पनि निर्देशित हुन्छन । त्यसपछि राज्यको लोकतान्त्रिक प्रक्रिया नै सुस्त र कमजोर बन्न पुग्छन् । मतदाताहरू निम्छरा बन्छन् र नेताहरू महाराजाधिराज र मठाधीश बन्छन् । यस्तो अवस्थामा त्यस्तो पार्टीले जनताको प्रतिनिधित्व गर्न सक्दैन । जनताबाट तिरस्कृत बन्न पुग्छ । पार्टी पार्टीजस्तो बन्दैन । विचार, सिद्धान्त र व्यवहारबीच मेल हुँदैन । त्यसैले पार्टीको आन्तरिक लोकतन्त्र, अनुशासन, विधि, पद्धति, प्रक्रिया, विचार, सिद्धान्तजस्ता कुरालाई लत्याउने काम कसैले पनि गर्नुहुँदैन ।

## पाठक-पत्र

### प्रधानमन्त्री चीन जाँदा 'राष्ट्रिय दिदी'को चर्चा

यतिबेला 'राष्ट्रिय भाउजू'लाई नचिन्ने कोही नेपाली छैन होला । राष्ट्रिय भाउजूजस्तै अर्को एउटा टाइटल थपिएको छ 'राष्ट्रिय दिदी' । कुरा हो प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डको अमेरिका र चीन भ्रमणको प्रसंग ।

प्रधानमन्त्रीको साथ छोरी गंगा दाहाल जहाँसुकै सँगै उभिएको फोटो देख्न सकिन्छ । कतिपय अवस्थामा प्रोटोकोललाई बेवास्ता गरिएको पनि प्रष्ट छ । चीन भ्रमण सम्पन्न गरेर फर्कंदा सेनाबाट सलामी अर्पण गर्दै गरेको फोटो सामाजिक सञ्जालमा निकै चर्चित बनेको छ । अन्तर्राष्ट्रिय विमानस्थलमा खिचिएको उक्त फोटोमा गंगा प्रतिनिधिसभाका सभामुख तथा राष्ट्रियसभाका अध्यक्षभन्दा अगाडि उभिएकी छन् । पछाडि कार्यवाहक प्रधानमन्त्रीसहित सम्माननीय व्यक्तिहरू उभिनु उदेकलाग्दो भन्दै धेरैले चर्को आलोचना र टिप्पणी गरेका छन् ।

अमेरिकी राष्ट्रपतिसँगको भेटमा पनि फूर्तिफार्ती उस्तै थियो । महँगो ब्याग देखाउनेदेखि आफू जान नमिल्ने ठाउँमा पहिले नै पुगिदिने । कसैले क्यामेरा बोकेको देख्यो कि पोज दिइहाल्ने । यस्ता गतिविधिमा प्रधानमन्त्री प्रचण्डले कहिल्यै हस्तक्षेप गरेनन् बरु कतै छोरी नदेख्दा दायाँबायाँ हेरेर खोज्ने । अमेरिकादेखि चीनसम्मकै भ्रमण दलमा सहभागी एक सदस्यसँग यसबारे सोध्दा भनियो, 'प्रोटोकोलले पूरै प्रतिबन्ध लगाएका क्रियाकलाप पनि उनले देखाइन् ।'

त्यसो भए प्रधानमन्त्री अथवा परराष्ट्र मन्त्रालयको शिष्टाचार महापाल दिलिप पौडेल र प्रवीण भट्टराईलगायतले किन नियम सिकाएनन् भन्ने प्रश्नमा उनको जवाफ निकै रमाइलो पाइयो । उनले भने 'अब कसले सिकाउने ! गंगालाई यसो गर्नु हुँदैन भन्नु भनेको प्रचण्डलाई नै सिकाउनुजस्तै हो । त्यही भएर चुप बसेका हुन् ।'

सचिवालयबाट 'दिदीको इच्छा यस्तो छ, दिदीले यस्तो चाहनुभएको छ' भन्दै दबाब आउने गरेको उनले सुनाए । उमेरले सानै भए पनि भ्रमण अवधिभर गंगालाई सबैले दिदी नै भनेर सम्बोधन गर्थे ।

प्रधानमन्त्रीको सचिवालय तथा सुरक्षा क्षेत्रबाट पनि गंगाका लागि यसो गर्न र उसो गर्न बारम्बार निर्देशन आइरहन्थ्यो । प्रधानमन्त्री प्रचण्डको चाकडी गर्नका लागि पनि गंगालाई टाउकामा चढाएको ती प्रतिनिधिले बताए । उनले हाँस्दै भने 'आखिर हामी सबैले गंगालाई राष्ट्रिय दिदी बनाएरै छोड्यौं ।' सामान्यतया गंगालाई दिइएको दर्जा स्वकीय सचिवको मात्र हो । तर, राष्ट्रपति र प्रधानमन्त्रीसँगको भेटमा मन्त्री, सल्लाहकार र मुख्यसचिवभन्दा उनलाई ठूलो हैसियत दिन मिल्ने कुरै होइन । यहाँसम्म कि फर्स्ट लेडीलाई सम्म पनि फर्मल ब्यांक्वेटभन्दा यस्ता महत्त्वपूर्ण भेटघाटमा सामेल गराउने प्रचलन छैन ।

कुनै बेला गिरिजाप्रसाद कोइरालाको दबदबा रहेका बेला सुजाताले राष्ट्रिय दिदीको छबि बनाएकी थिइन् । गंगा र सुजाता दुवै नेताका छोरी भए पनि सुजाताको हैसियत नेपाली कांग्रेस र राष्ट्रिय राजनीतिमा केही माथि थियो । 'केही अप्ठ्यारो परेमा सबै जना अब जे गर्छिन्, राष्ट्रिय दिदीले गर्छिन् भन्दै खासखुस गर्ने बानी नै परेको थियो । तर अप्ठ्याराको समाधानका लागि चाहिँ दिदी चाहिएको होइन अप्ठ्यारो सिर्जना गर्ने नै राष्ट्रिय दिदी भएकाले हो ।'

*- निजी अंगरक्षकहरू*

### • हेडक्वार्टरमा डिआइजी फालाफाल, एसएसपीलाई मालामाल !

एउटै दर्जाको अधिकृतले हस्ताक्षर गरेको प्रमाणपत्र लिनुपर्ने भएपछि सशस्त्र प्रहरीका हाकिमहरू रुष्ट भएका छन् । एपिएफ कमाण्ड तथा स्टाफ कलेजमा एसएसपीले नै एसएसपीलाई तालिम सकेको प्रमाणपत्र दिने चलन छ ।

हाल स्टाफ कलेजको कमाण्ड नरेन्द्र सेनले चलाइरहेका छन् भने शंकर खनाल, कृष्ण ढकाल, मनीष थापालगायत एसएसपीले उनले हस्ताक्षर गरेको प्रमाणपत्र लिएका छन् । सशस्त्रको हेडक्वार्टरमा डिआइजीहरू थुप्रिएर बसिरहँदा स्टाफ कलेजजस्तो महत्वपूर्ण ठाउँ एसएसपीको जिम्मा लगाइएको छ ।

डिआइजी किशोर प्रधान, गणेश ठाडा, कुलबहादुर नेम्वाङ, दुर्गा भट्टराई हेडक्वार्टरमा रनभुल्ल भएर बसेका छन् । उनीहरू ठाउँ नभएर होइन, ठाउँ नपाएर थन्किएका हुन् । एसएसपीले हस्ताक्षर गरेको प्रमाणपत्रले अन्तर्राष्ट्रिय स्तरमा तालिमको मान्यता घटाउने सशस्त्रका अधिकृतहरूको भनाइ छ । 'जर्नेलसम्मको हस्ताक्षर भएको भए पनि चित्त बुझाउँथे होलान् । बिचराहरू आफ्नै स्तरकोलाई कमाण्डर भनिरहेका छन्, तिनकै हातबाट प्रमाणपत्र थापिरहेका छन् । डिआइजी खाली नभए पनि एउटा कुरा हुन्थ्यो । हेडक्वार्टरमा डिआइजी फालाफाल छन्, सिक्नुपरेको छ एसएसपीबाट', स्रोतले भन्यो ।

सेनले कलेजमा अहिलेसम्म एउटा पनि कक्षा नलिएको उनीहरूको भनाइ छ । कमाण्ड, लिडरसिप, म्यानेज्मेण्ट सिकाउने ठाउँको जिम्मा एसएसपीलाई दिँदा धेरैको टाउको दुखाइको विषय बनेको छ । हाल स्टाफ कलेजमा एसपीहरूको तालिम चलिरहेको छ । तालिम दिन कमाण्डर सेनको स्तरले नभ्याउने भन्दै उनीहरूले समेत आलोचना गरिराखेका छन् ।

'एसपीलाई तालिम दिन एसएसपीको स्तरले पुग्छ ? स्टाफ कलेज उच्चहरूले तालिम गर्ने ठाउँ हो । डिएसपी, एसपी, एसएसपीहरूले यहाँबाट तालिम लिन्छन् । जसले तालिम लिन्छ, उसैलाई कमाण्डमा राखिएको छ के भन्ने ? पँहुच भए पुग्ने रहेछ', तालिमरत एक जना एसपीले गुनासो पोखे ।

**सिनियरहरू लाइनमा, जुनियरले मारे बाजी**

एसएसपीको लाइनमा सबैभन्दा जुनियर हुन्, नरेन्द्र सेन । अरु सबै उनीभन्दा सिनियर छन् । ककनीका कृष्ण ढकाल, बर्दघाटका विष्णु भट्टराई, झापाका कमल तिमिल्सिना, बनबेहडाका श्रीकृष्ण अधिकारी, टिकापुरका विनोद श्रेष्ठ, प्रविन कँडेल, दिगविजय सुवेदी, मनिश थापा पालो कुरेर बसिरहँदा उनले पहुँचको आधारमा सिँधै कमाण्डको जिम्मेवारी पाएका हुन् ।

इन्स्पेक्टरको तालिममा पनि ७० प्रतिशतभन्दा कम नम्बर ल्याएका उनी एकाएक कमाण्डर बनेपछि अन्यले असन्तुष्टि जनाउनु स्वाभाविकै पनि हो । माओवादीका नेताहरूको चाकडी गरेर उनले सबैभन्दा ठूलो तालिम केन्द्र चलाउने जिम्मा पाएको स्रोत बताउँछ । प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' की बुहारी बिना मगर, वर्षमान पुन, ओनसरी घर्ती, कृष्णबहादुर महरालगायतको अघिपछि गरेरै उनले बाजी मारेको सहपाठीहरूको भनाइ छ ।

*- तालिमे एसपीहरू*

### • ग्राउण्डेड जहाज परीक्षण नै नगरी आकाशमा

नेपाल धेरै नै हवाई दुर्घटना हुने मुलुकमध्येमा पर्छ । पटक-पटक विमान दुर्घटनाले अन्तर्राष्ट्रिय स्तरसम्म हाम्रो हवाई यात्रा असुरक्षित रहेको सन्देश दिएको छ । तर, यसतर्फ सम्बन्धित निकायको ध्यानाकर्षण हुन सकेको छैन ।

असोज १२ गते श्री एयरलायन्सको जहाजमा देखिएको समस्या यस्तै लापरवाहीको एउटा गतिलो उदाहरण हो । श्रीको एसएचए १६०१ नम्बरको जहाज माउण्टेन फ्लाइटमा काठमाडौंबाट गन्तव्यतर्फ उडेको केही बेरमै बायाँतर्फको इञ्जिनबाट इन्धन चुहिएको थियो ।

त्यसपछि जहाजलाई करिब आधा घण्टा आकाशमा घुमाई इन्धन खाली गराएर बिहान ८ बजे त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा अवतरण गराइयो । श्रीले सो दिन सबै उडानसमेत स्थगित गरेको थियो । जहाजको प्राविधिक परीक्षण गर्न १७ वटा उडान स्थगित गरेको श्रीको जहाजहरूमा पछिल्लो समय एकपछि अर्को प्राविधिक समस्या देखिएका छन् । स्रोतका अनुसार सो जहाज एक वर्षदेखि ग्राउण्डेड थियो । थन्किएर बसेको जहाजलाई प्राविधिक परीक्षणबिना उडाउँदा सो दिन ठूलो क्षति व्यहोर्नुपर्ने हुनसक्थ्यो । मर्मत नगरिकन राखेको जहाजमा ४२ जना यात्रु थिए ।

प्राधिकरणकै मिलेमतोमा बिना टेष्ट फ्लाइट व्यवसायिक उडान गर्न दिइएको स्रोतको दाबी छ । यता, श्री एयरलायन्सले उक्त जहाज ग्राउण्डेड गरेर राखिएको कुरा झुठ भएको दाबी गरेको छ । जहाज सुचारु अवस्थामा रहेको श्रीका एक कर्मचारीले बताए । उनका अनुसार नियमित प्राविधिक चेकजाँच गरिरहेको जहाजमा सो दिन अचानक इन्धन चुहिएको हो । हाल मर्मत भइरहेको उनले जानकारी दिए । 'इन्धन चुहिएको जहाजले नियमित उडान गरिरहेको थियो । हामीले प्राविधिक चेकजाँच पनि गरिराखेका छौं । त्यो दिन एकाएक इन्धन चुहिएपछि फर्काइएको हो । अहिले मर्मत भइरहेको छ । जहाज ग्राउण्डेड गरिएको भन्ने कुरा झुठ हो', ती कर्मचारीले भने ।

प्राधिकरणका प्रवक्ता जगन्नाथ निरौलाले जहाजबाट इन्धन चुहिएको विषयमा कुनै पनि जानकारी नभएको बताए । इन्जिनबाट इन्धन चुहिएर जहाज फर्काइएकोबारे प्राधिकरणलाई कुनै सूचना नआएको उनको भनाइ छ । 'इन्धन चुहिएको त थाहा छैन, ग्राउण्डेड भएको के थाहा हुनु । तैपनि म बुझ्छु', उनले भने ।

# शासन, सुशासन र अनुशासन चीनबाट सिक्नुपर्ने कुरा हुन्

**डा.मीनबहादुर श्रेष्ठ, उपाध्यक्ष, राष्ट्रिय योजना आयोग**

*दोस्रोपटक राष्ट्रिय योजना आयोगको नेतृत्वदायी भूमिकामा छन् डा मीनबहादुर श्रेष्ठ । ०७३ सालमा प्रचण्ड दोश्रो पटक प्रधानमन्त्री हुँदा ११ महिना यही जिम्मेवारी निर्वाह गरिसकेका श्रेष्ठको नाम यसपटक नेकपा माओवादी केन्द्रबाट समानुपातिकको सूचीमा समेत थियो तर अध्यक्षले उनलाई सांसदभन्दा पनि महत्वपूर्ण मानिने राष्ट्रिय योजना आयोगमा दोह्रोऱ्याएका छन् । श्रेष्ठले राष्ट्र बैंकमा ४ वर्ष अनुसन्धान विभागको कार्यकारी निर्देशकका साथै प्रवक्ताको जिम्मेवारीसमेत निभाएका थिए । राष्ट्र ऋण व्यवस्थापन विभागमा काम गरेका उनले नेपालबाट एमपीए, बेलायतबाट एमबीए र अष्ट्रेलियाबाट अर्थशास्त्रमा विद्यावारिधि गरेका छन् । हालै प्रधानमन्त्रीसँग उत्तरी छिमेकी मुलुकको भ्रमण सकेर फर्किएका उनी १५४ देशमा कार्यान्वयनको चरणमा गइसकेकेको बिआरआइअन्तर्गत नेपालमा अब बढीमा तीन महिनाभित्रैसम्झौता हुने गरी काम भइरहेको बताउँछन् ।*

***– हरि गजुरेल***



*० चीन भ्रमण कत्तिको फलदायी रह्यो यसपटक ?*

- भ्रमण अर्थपूर्ण रह्यो । राष्ट्रिय योजना आयोग र त्यहाँको राष्ट्रिय विकास तथा सुधार आयोग (एनडिआरसी) बीचमा नीति, योजना, अध्ययन, अनुसन्धान विषयक सहयोग आदानप्रदान गर्ने, भौतिक पूर्वाधार, रोड कनेक्टिभिटी, ट्रान्समिटर लाइन, कृषि, विद्युत्लगायतका धेरै बिषयमा समझदारी भएको छ । चीनले नेपाललाई गर्ने सहयोग सबै तिब्बत सरकारबाट कार्यान्वयन हुँदो रहेछ । नेपाललाई चीनले कति महत्व दिएको छ भन्ने कुरा तिब्बतमा एउटा मात्र विदेशी नियोग (नेपालको) रहेबाट पुष्टि हुन्छ । चीन भ्रमणमा दुई वटा चमत्कार देखियो । करिब एक दशकमा ८० करोड जनतालाई गरिबीबाट त्यसै मुक्त गर्न सकेका रहेनछन् । भौतिक पूर्वाधारदेखि हरेक क्षेत्रमा गरिएको विकास अभूतपूर्व लाग्यो । हाम्रा प्रधानमन्त्री र त्यहाँका शीर्षस्थ नेताहरूबीच ओपन डिस्कसन भयो । राजकीय भ्रमणमा यति धेरै खुलस्त छलफल हुन्छ भनेर मैले सोचेको पनि थिइन । हामी सानो र विकासमा वामे सर्दै गरेको मुलुकलाई चीनले इक्वेल ट्रिटमेन्ट गरेको देखियो ।

*० हाम्रा नेताहरू चीनभक्त त भए तर चीनबाट सिक्न सकेनन् भन्ने गरिन्छ । योजना आयोगले चाहिँ चीनबाट के के सिक्यो होला ?*

- चीनबाट धेरै कुरा सिक्न सकिँदो रहेछ । योजना आयोगले सिक्ने भनेको नीति, योजना कस्तो बनाउने ? कसरी नतिजामुखी बनाउँदा कार्यान्वयन गर्न सकिन्छ ? भन्ने हो । हामीले त्यसमा सहयोग मागेका छौं । चीनबाट सिक्नुपर्ने विकासको मोडल तीन प्रकारका छन्, ह्युमन रिसोर्समा ठूलो लगानी अर्थात् गुणस्तरीय शिक्षा र स्वास्थ्य सेवा दिने । इन्टर्नसिपमा लगानी गर्ने, कृषिलाई इन्टरप्राइजेजको रुपमा लिने र गुणस्तरीय पूर्वाधार निर्माण गर्ने । नेपाल यहींनेर चुकेको छ । एकातिर लामो समयसम्म पूर्वाधार निर्माण नहुँदा त्यसको लागत चुलिने नै भयो । समयमै पूर्वाधार बनाउन सकिएको भए अर्थतन्त्र सवलीकरण गर्न सकिन्थ्यो र जनताले पर्याप्त लाभ पाउँथे । चिनियाँहरूले समयभन्दा अगावै गुणस्तरीय पूर्वाधार तयार पार्न सक्दा रहेछन्, उदाहरण खोज्न सशस्त्र प्रहरीको बलम्बूस्थित उकेडेमी र पोखरा अन्तर्राष्ट्रिय विमानस्थल हेरे पुग्दछ । कार्यान्वयन गर्न सकिने खालका मात्र नीति तथा योजना कसरी बनाउन सकिन्छ भन्ने विषय योजना आयोगले सिक्नुपर्ने रहेछ । यस्तै हामीले नेपाललाई कृषिमा नाफामूलक बनाउन सकेनौं । मुलुकको विकासका लागि शासन, सुशासन र अनुशासन जरुरी छ भन्ने विषय उत्तरी छिमेकीबाट अनुकरण गर्नु जरुरी छ । त्यहाँ शासक हुन् वा प्रशासक, भ्रष्टले मृत्युदण्ड पाउँछन् । जनता अनुशासनमा हिँडेका छन् ।

*० राष्ट्रिय योजना आयोगले यस पटक बिआरआइ कार्यान्वयनका लागि ठूलै होमवर्क गरेको देखिन्थ्यो तर यसपालि बिआरआइको 'ब' पनि भएन । कहाँ, के तयारी नपुगेको हो ?*

- सि चिन्फिङले लङटर्म भिजन र विश्वकै समृद्धिका लागि सोचेर बिआरआइ कार्यक्रम ल्याउनुभयो । त्यसमा नेपालसहित १५५ मुलुकले हस्ताक्षर गरेका छन् । बिआरआइमा जो जसले समझदारी गरे, उनीहरूले कार्यक्रम लागू गरे । हामीले सम्झौता गऱ्यौं तर कार्यन्वयन बाँकी रह्यो । सोही कारण बिआरआइमार्फत अगाडि बढाइएको पोखरा अन्तर्राष्ट्रिय विमानस्थल यसअन्तर्गतको होइन भन्ने भाष्य निर्माण हुन पुगेको छ । बिआरआइ कार्यान्वयन सम्झौता जहिलेदेखि हुन्छ, त्यसपछि आएका कार्यक्रममात्र बिआरआइअन्तर्गतका हुने भए । जस्तो : सुर्खेत-हिल्सा रोड, तातोपानीका धेरै कामहरू बिआरआइ कनेक्टिभिटीअन्तर्गतका छन् । चिनियाँहरूको चासो र चिन्ता नै पौने २ सय राष्ट्रले गर्दा तिमीहरू कार्यन्वयनमा सम्झौता किन गर्दैनौ भन्ने रहेको देखिन्छ । बिआरआइका जति पनि सम्झौता भएका छन्, ती सबै परराष्ट्र मन्त्रालयमार्फत नै भएका छन् । विश्वभर जिटुजी सम्झौता परराष्ट्र मन्त्रालयबाटै गर्ने प्रचलन हो । बिआरआइमा धेरै विषय जोडिन्छन् । हामीसँग कम्तीमा १० वटा मन्त्रालयसँग सम्बन्धित कार्यक्रम छन् । बिआरआइले अन्य मुलुकमा जे जस्तो टेम्प्लेट पठाएको छ, हामीलाई पनि त्यही नै पठाएको हो । सम्झौता भनेको दुईपक्षीय हुन्छ । हामीले तिम्रा यी यी बुँदा मान्न सकिन्छ, यी बुँदाचाहिँ हामीले भनेको तिमीहरूले मान्नुपर्दछ भनेर पठाएका छौं । त्यसमा उसले ९० प्रतिशत ठीक छ भनेको अवस्था छ । सम्माननीय प्रधानमन्त्रीको चीन भ्रमणअघि योजना आयोगले सबै मन्त्रालयलाई बोलाएर दुई दिन बिआरआइबारे छलफल चलाएको हो । यसपटक प्रधानमन्त्रीज्यूको चीन भ्रमणमै बिआरआइ कार्यान्वयनमा हस्ताक्षर होला भन्ने अपेक्षा थियो तर केही विषयमा अझै छलफल गरौं भनेर थाती राखिएको हो । अब छिट्टै सम्झौता हुन्छ ।

*० प्रधानमन्त्रीको टिममा सहभागी भएर बेइजिङ जानु दुई महिनाअगाडि पनि छुट्टै चीन जानुभएको थियो । त्यसबेला समकक्षी योजना आयोगको उपाध्यक्षसँग भेटवार्ता भएको थियो भन्ने सुनिन्छ । केही सल्लह भएन र ?*

- 'ग्लोबल एक्सन फर सेयर डेभलपमेन्ट' को निमन्त्रणामा पुगेको थिएँ । त्यस समय राष्ट्रिय विकास तथा सुधार आयोग (एनडिआरसी) का उपाध्यक्षसँग यसअघि नै भएको दुईवटा सम्झौताबारे प्रगति समीक्षा भयो । बिआरआइको अवधारणा तयार पारेको नै त्यहाँको योजना आयोगले हो । यसैबमोजिम उसले बिआरआइ नेपालले किन कार्यन्वयन गरेन भनेर चिन्ता व्यक्त गरेको थियो । त्यहाँबाट फर्किएलगत्तै प्रधानमन्त्रीज्यू र परराष्ट मन्त्रालयसँग कुरा राखेपछि २०२१ को मे महिनामै हामीले बिआरआइ कार्यान्वयनका लागि यी यी बुँदाहरू मान्छौं, यी बुँदा तिमीहरूले मान भनेर पठाएको थाहा लाग्यो । अब एकदमै कम इस्युमा सहमति जुट्न बाँकी छ । बढीमा अबको दुईदेखि तीन महिनाभित्रमा सबै कुरा टुंग्याउँछौं होला ।

*० नेपालले बिआरआइभन्दा पछि हस्ताक्षर गरेको हो एमसिसीमा । तर एमसिसी कार्यान्वयनमा गइसक्दा पनि बिआरआइको हलो अड्किनुराख्नुको पछाडि अरुकै इन्ट्रेष्टले पो काम गरेको हो कि ?*

- होइन । बिआरआइ सम्झौतामा हस्ताक्षर भएको ०७३ सालमै हो । त्यसबेला प्रचण्ड प्रधानमन्त्री हुनुहुन्थ्यो । योजना आयोगमा म थिएँ । यो बीचमा सरकार परिवर्तन, कोभिड, केही राजनीतिक अस्थिरताका कारण कार्यान्वयनमा ढिलाइ भएको पक्कै हो । हामीले मुलुकको हित हुने सबै खालको सहयोग लिनुपर्दछ ।

*० चाहे एमसिसीको सवाल होस् वा झण्डै १५४ देशले कार्यान्वयन गरेको बिआरआइ । यस्ता प्रोजेक्टहरू आउँदा किन यति धेरै नकारात्मक प्रचार हुन्छ हामीकहाँ ?*

- सबैले नकारात्मक प्रचार गरेका छैनन् । एमसिसी, बिआरआईलाई राम्रो विकास योजना भन्नेहरू पनि छन् । तर, अहिले सामाजिक सञ्जालमा १० जनाले नराम्रो भनेर लेख्नासाथ लौ खत्तम रहेछ भन्ने ढंगले तरंग फैलिन्छ । एमसिसीका बारेमा पनि समर्थन गर्ने, विरोध गर्ने छँदै थिए । अमेरिका र चीन मात्र होइन, दक्षिणी छिमेकीसँग पनि धेरै काम भएका छन् । नेपाल जस्तो मुलुकले चीन, भारत, अमेरिका सबै देशको सहयोग लिनुपर्दछ ।

*० १६ औं पञ्चवर्षीय योजनाको अवधारणा पास भइसकेको छ । केही अर्थशास्त्रीले ययसलाई कर्मकाण्डी र कपी पेष्ट भएको आरोप लगाएका छन् । तपाईं के भन्नुहुन्छ ?*

- यस्तो आरोप लगाउनले पढ्दै नपढी भन्यो वा पढेर पनि बुझ्ने क्षमता रहेनछ । धेरैले १६ औं पञ्चवर्षीय योजनाको अवधारणा पहिलाको भन्दा पनि पृथक आयो भनेका छन् ।

*० उसोभए १६ औं पञ्चवर्षीय योजनामार्फत नयाँपन दिँदै हुनुहुन्छ हैन त ?*

- यसअघि कार्यक्रम कागजी हुन्थे । यसपटक कार्यान्वयनमा जाने खालका हुन्छन् । पुरानो फर्म्याट नै चेन्ज गरिएको छ । हाम्रो देश समस्यामा परेको नै उत्पादन र रोजगारी नभएर हो । आन्तरिक उत्पादन नहुँदा तीन चार खर्बको कृषि वस्तु आयात गर्दछौं । शोधनान्तर घाटा चुलिँदो छ । त्यसैले सबै कुरा

**शासक हुन् वा प्रशासक, भ्रष्टले मृत्युदण्ड पाउँछन् । जनता अनुशासनमा हिंडेका छन् ।**

•••

**उसले ९० प्रतिशत ठीक छ भनेको अवस्था छ ।**

•••

**गाउँ गाउँमा मोटरबाटो पुगेपछि उत्पादन बढाउनुपर्ने हो तर उल्टो भयो । झन् गाउँ नै रित्तियो, शहर भरियो ।**

खल्बल्याएको छ । त्यसको समाधानका लागि उत्पादन र रोजगारी बढाउनु पर्दछ । भएका युवा जनशक्ति रोजगारीका लागि विदेशिएका छन् । उत्पादनका लागि प्रधानमन्त्री कृषि आधुनिकीकरण परियोजना ल्याइयो । त्यसले अलि अलि उत्पादन गरेको देखिए पनि रोजगारी दिएन । हामीले ल्याएका पुराना प्रोजेक्टको पुन:संरचना गर्नुपर्ने देखियो ।

*० गेम चेञ्जर मानिएका राष्ट्रिय गौरवका आयोजनाहरूको प्रभावकारी कार्यान्वयनका लागि योजना आयोगले के गर्दैछ ?*

- पूरा नहुने खालका आयोजना हटाइदिने । सडक बनाउने हो भने त्यसले उत्पादनलाई सहयोग गर्छ कि गर्दैन, रोजगारी दिन्छ कि दिँदैन हेर्ने । हाम्रो अहिलेसम्मको विकासको मोडल हेरौं त, एउटा गाउँमा रोड लगियो भने त्यसले हरेकको घर घर जोड्नैपर्ने । यतिसम्म राजनीतिकरण हुन्न । न त उक्त सडकको हेड मिल्छ न सोल्भ । एकातिर खर्च धेरै, अर्कोतिर त्यही सडकका कारण पहिरोको जोखिम । गाउँ गाउँमा मोटरबाटो पुगेपछि उत्पादन बढाउनुपर्ने हो तर उल्टो भयो । झन् गाउँ नै रित्तियो, शहर भरियो । विद्यालयमा ठुल्ठूला भवन, खेल मैदान बनाइयो । त्यहाँ शिक्षकभन्दा विद्यार्थी कम, त्यो पनि गुणस्तरविहीन । अग्ला अग्ला डाँडा आफैंमा भ्यू टावर हुन् । तिनै डाँडामा लगेर भ्यू टावरका नाममा पैसा खन्यायौं । पूर्वाधारमा गरिएका लगानीको लाभ लिन सकेनौं । यी कुरालाई ध्यानमा राखेर अत्यावश्यक गौरवका आयोजना पाँच वर्षभित्रैमा सक्ने, नसक्नेलाई ड्रप गर्ने हाम्रो योजना छ ।

*० तपाईंको ठम्याइमा, यो मुलुक बन्न नसक्नुको कारण के रहेछ ?*

- सम्भावनाका हिसाबले देश बनाउन सजिलो छ । चुनौती र समस्याहरू म्यानेज गर्न सकिने खालका छन् । नेपालको हालत गए गुज्रेको होइन तर यसो भनेरै दुष्प्रचार गरिँदैछ । नेपाल बिग्रियो, सिद्धियो भनिँदैछ । हामीले जीवनमा जे देखेका छौं, त्यसमा प्रचुर विकास भएको पाउँछौं । हाम्रो पुस्ताले धेरै विकास भएको देख्छ तर अहिलेको पुस्ताले पैदल हिँड्न परेन, गाउँ देखेन । बोर्डिङ स्कूलमा पढ्यो, दु:ख वा अभाव के हो देखेन । उनीहरूलाई अमेरिका, बेलायतमा के छ सबै थाहा छ तर ती मुलुक बन्नका लागि तीन चार सय वर्ष समय लागेको थियो भन्नेचाहिँ थाहा छैन । हाम्रो देश बनेन, चोर फटाहा नेताहरूले बिगारे भन्ने भाष्य निर्माण भएको छ । पञ्चायतकालसम्म त केही गर्न पाइँदैनथ्यो । बहुदलीय व्यवस्था आएसँगै केही सुधार भए, विकृति पनि पलाए । संयुक्त राष्ट्रसंघले छोटो समयमा समावेशीकरण, सामाजिक क्षेत्रमा द्रुत विकास गरेको भनेर नेपाललाई पुरस्कृत गरेको छ तर आर्थिक रुपमा यस्तो विकास हुन सकेको छैन । विकसित मुलुकको तुलनामा हाम्रो आर्थिक बृद्धिदर बढी छ । तेह्रौं योजनासम्ममा राखिने लक्ष्य र प्राप्ती फरक थियो । चौधौं पञ्चवर्षीय योजनामा तीन वर्षमा ७ दशमलव २ को आर्थिक बृद्धिदर हासिल गर्ने लक्ष्य लिएकोमा ७ दशमलव ५ गर्न सफल भयौं । १५औं पञ्चवर्षीय योजनामा पनि महत्वाकांक्षी लक्ष्यहरू हासिल गर्न सकिन्छ भन्ने थियो । दोहोरो अंकको आर्थिक वृद्धिदर हासिल गर्न सक्छौं भन्ने लक्ष्य राखिएकामा कोभिड लगायतका राजनीतिक अस्थिरताका कारण नकारात्मककै अवस्थामा पुग्यो । अहिले हेर्ने हो भने पूर्वाधार विकास, वैदेशिक पर्यटक आगमन, वैदेशिक लगानीमा राम्रै छ । प्रचण्ड प्रधानमन्त्री हुँदा अर्थतन्त्र ओरालो लाग्यो, अब मुलुक श्रीलंका हुन्छ भनिएको होइन र ? वैदेशिक वचत, शोधान्तर सकारात्मक छ । बैंकमा लिक्विडिटी बढिरहेको छ । व्याजदर घटिरहेको छ । यी इन्डिकेटरहरू सबै पोजिटिभ छन् । चिन्ता राजश्व कम उठ्यो । खर्च क्षमता बढेन भन्ने हो । यसलाई संबोधन गर्न योजना आयोगले क्यापिटल एक्सपिण्डिचर बढाउने, प्रधानमन्त्री अध्यक्ष रहने गरी ठूला आयोजना कार्यान्वयन सहजीकरण गर्ने काम हुँदैछ । यस्तो कुरा बेलायतजस्ता मुलुकमा लागु भएको छ र धेरै देशले फलो गरेका छन् । यसले यो वर्षको पूँजीकरण खर्च बढाउने गरी काम अगाडि बढ्दछ । खर्च र आर्थिक क्रियाकलापहरू बढेपछि स्वत: राजश्व बढी उठ्छ । राजश्व बढाउनका लागि जनतामा कर थोपर्ने होइन कि अर्थतन्त्र चलायमान बनाउने, पुँजीगत खर्च बढाउने सरकारले सोचिरहेको स्थिति छ । अर्को मूल्यवृद्धिसम्बन्धी तपाईंको प्रश्नमा अमेरिका, बेलायतजस्ता मुलुकमा ११ प्रतिशतसम्मले मूल्यवृद्धि भएको छ । अघिल्ला वर्षहरूमा हामीकहाँ पनि दोहोरो अंककै मूल्यवृद्धि थियो ।

*० योजना आयोगको उपाध्यक्षको कुर्सीबाट मुलुक निर्माणका लागि के-कस्ता प्रतिबद्धता व्यक्त गर्न सक्नुहुन्छ ?*

- योजना आयोगले राम्रा नीति, योजना बनाउने हो । मुलुकको डेटा सिष्टम एकदमै कमजोर छ । जनार्दन शर्मा अर्थमन्त्री हुँदा विपन्नहरूलाई दशैंअगाडि १०/१० हजार भत्ता दिऔं न त भनेर कार्यक्रम ल्याउनुभयो । दिन सकिएन, कारण थियो- हामीसँग तथ्यांकै छैन । अहिले ८८ किसिमको भत्ता वितरण भइरहेको छ । अर्बपतिहरूले समेत ज्येष्ठ नागरिक भत्ता लिइरहेका छन् । तथ्यांक नहुँदा लाभ नपाउनुपर्ने वर्गले लाभ लिइरहेको छ, लाभ पाउनुपर्ने वर्ग छुटेका हुन सक्छन् । जस्तो : दक्षिणी छिमेकी देशमा राशन कार्डको व्यवस्था छ । तथ्यांक भएकै कारण हो बाँड्न सकिएको । अब हामी थोरै काम गर्छौं तर नतिजा देखिने गरी गर्छौं ।

## फोटो

दिपेन्द्रराज गिरी




पितृलाई दान दिन गाडी रिजर्भ गर्दा, नेपालीको चलन यस्तो कोही मर्दापर्दा
पण्डितजीले खपत गर्लान् या कसैलाई बेच्लान्, पाक्नै लाग्यो कान हाम्रो मन्त्र भर्दाभर्दा

## मेयरसाप लाइभमै आए, कमिशन कुन मन्त्रीले खाए ?

*रुकुम पश्चिमको आठबिसकोट नगर प्रमुख रवि केसीले जनताका आवश्यकताको आधारमा बजेट माग गर्दा पनि मन्त्रीले कमिसन मागेको फेसबुक लाइभमार्फत बताएका छन् । केसीले आठबिसकोट नगरपालिकामा आवश्यकताका आधारमा बजेट उपलब्ध नहुँदा गत आर्थिक वर्षको काम सम्पन्न भए पनि साढे १३ करोडभन्दा बढी दायित्व व्यहोर्नुपरेकाले स्थानीय उपभोक्ता समिति र निर्माण कम्पनीलाई रकम दिन नसकेको बताए । कर्णालीका मुख्यमन्त्री राजकुमार शर्मा नै रुकुम पश्चिमका हुन् । संघीय सरकारमा अहिले रुकुम पश्चिमबाट कुनै पनि मन्त्री छैनन् । त्यस्तै, रुकुमकै विमला केसी माओवादी केन्द्रको प्रदेश अध्यक्ष छिन् । नाम किटान नगरे पनि नगर प्रमुख केसीले प्रदेश सरकार र आफ्नै राजनीतिक नेतृत्वप्रति बढी आलोचना गरेका छन् । उनी नेकपा माओवादी केन्द्रको कर्णाली प्रदेश समिति सदस्य पनि हुन् ।*

## मेरो कथा, मेरो व्यथा

हरिजी
priyarasuwa@gmail.com

# गायिकाको गलामा छिमेकी महिलाहरूको हमला

के देश पैसा र पावर हुनेको मात्र हो ? तिनकै पछि लाग्ने हो न्यायको तराजु हातमा लिएका श्रीमान्‌देखि सुशासन कायम गराउन खटिएका प्रशासन र प्रहरीहरूले ? होइन भने कुटपिट भएका फुटेज नै प्रहरीलाई दिँदासमेत वर्ष दिनसम्म किन कारबाही प्रक्रिया अगाडि बढ्दैन ? यो आक्रोश हो तिम्रो फोटो देखाई देखाई, तोरी लगाएर जस्ता चर्चित गीतमार्फत श्रोताका मनमा बस्न सफल गायिका बुनु उप्रेतीको । पाँच वर्षदेखि छिमेकीको अनेकन यातना सहिरहेकै थिए । भनिन्छ, सहनुचाहिँ सबैभन्दा ठूलो अपराध हो । उनको मौनतालाई छिमेकीले सायद कमजोरी ठाने र त वर्ष दिनअघि घरमा पसेर कुटपिट गरे । असोज अन्तिम साता छिमेकी महिलाहरू मिलेर निर्घात कुटपिट गरेको वर्ष दिन पुग्न लाग्दा पनि पीडकहरूलाई किन हुँदैन कानुनी कारबाही ?

६ वर्षदेखि ललितपुरको लुभुमा घर किनेर बस्दै आएकी छन् । दुई छोरीका साथमा । श्रीमान् वैदेशिक रोजगारीको सिलसिलामा दुबईमा । पाँच वर्षदेखि छिमेकी महिलाले पटक-पटक अभद्र व्यवहार गर्दै आएका । अघिल्लो वर्ष असोजमा मरणासन्न हुने गरी कुट्दा शनिबारको दिन थियो । घरमा रंगरोगनको काम हुँदै थियो । सानो गमलाहरू बाहिर राख्दा छिमेकीलाई झगडाका लागि अरु बहाना चाहिएन । र, झम्टिए । त्यहाँ आएकामध्ये एउटीले यसलाई आज यहीं मारौं भन्न भ्याइन् । यसरी घरभित्रै महिलाले अर्को महिलामाथि कुटपिट गर्दा वडाध्यक्ष र सदस्य छुटाउनतिर लाग्नुभन्दा कुटाइ खाइरहेको दृश्य मोबाइलमा कैद गर्दै बसिरहेका थिए ।

छिमेकीले घाँटीमा अँठ्याएका कारण स्वर भासिएको छ । र, सांगीतिक जीवनमा असर परेको छ । यसरी कुटाइ खानेले न्याय नपाउने भएपछि विपक्षीको आत्मबल बढ्ने नै भयो । कुटपिट गर्ने १८ जनाले उल्टै मुद्दा हालेका छन् । उनले वर्ष दिनअगाडि जिल्ला अदालतमा दर्ता गरेको मुद्दाको अस्ति आइतबार बल्ल बकपत्र गरिएको छ । थाहा छैन, साक्षीको के-कस्तो बयान छ ।

यसअघि गत वर्ष नै आक्रमणको फुटेज बुझाइएको थियो लुभु प्रहरीलाई । घरमा मात्र होइन मार्टभित्र सामान किनेको बेलासमेत उनीमाथि आक्रमण भयो । लुभु चौकीले फुटेज उपलब्ध गराउने भनेको थियो । तर, पछि दिएन । सातदोबाटो प्रहरी वृत्तमा गत वर्ष ज्यान मार्ने उद्योगमा मुद्दा दर्ता हुँदा प्रहरीले पक्राउ गर्ने आश्वासन दिँदै अभद्र मुद्दामा दर्ता गर्न भन्यो । घाउमा खत नबस्दै फेरि पुस १ गते उसैगरी

**श्रीमतीको त वास्ता भएन रे ल । दुई छोरी बुनु उप्रेतीको मात्र हो ?**

छिमेकी सपना श्रेष्ठसहित तीन जनाले लात्ती, मुड्की बजारे । छोरीहरूले प्रहरीलाई बोलाए । घटनास्थलमा लुभुबाट प्रहरी आयो । घटनास्थल हेरेर फर्कियो । प्रमाण थियो शरीरभरि भएका चोट र घाउहरू । मुद्दा शाखामा बस्ने प्रहरी भन्छन्, लडेर घाउ चोट लागेको वा एक्सिडेण्ट भएको ? तपाईंको निवेदन कसरी लिन सकिन्छ ? फेरि जेठमा उसैगरी कुटपिट भयो । वर्ष दिनको अन्तरालमा पटक पटक गरी ५ पटकसम्म छिमेकीहरूबाट कुटाइ भएको छ । यही कारण मानसिक र शारिरिक यातना भोग्दै छिन् ।

महिला आयोगका प्रतिनिधिलाई जानकारी गराएपछि फिल्डमै आएको थियो नवजीवन परोपकार केन्द्रका दुर्गानाथ शर्मासहित महिला आयोगका सदस्य कृष्णकुमारी खतिवडाको टोली । खै त्यहाँबाट पनि न्याय मिलेन । सातदोबाटोमा मुद्दा हेर्ने इन्स्पेक्टर थिए सुवास केसी । डिएसपीलाई भेटेर पीडकलाई कारबाही गर्न आग्रह गर्दासमेत केही कारबाही भएन । जेठी छोरी १६ वर्ष र कान्छी १३ लागिन् । उनी सांगीतिक फिल्डको मान्छे । घरमा रियाज गर्ने । छिमेकीले टोलै थर्काउने गरी स्पिकर घन्काउँदा केही नहुने, अनि गायिकाले घरमा रियाज गर्दा छिमेकीलाई डिष्टर्ब हुने ! छिमेकीले रक्ताम्य हुने गरी कुटपिट गर्दा प्रहरी आउँदैन । घटनास्थलबाट त्यसै फर्कन्छ । देखे पनि नदेखेझैं गर्दछ, उजुरी लिन मान्दैन । अनि उनले रियाज गर्दा छिमेकीलाई डिष्टर्ब गरिस् भन्दै प्रहरी प्रशासन आउँछ र थर्काउँछ । उनीमाथि हमला गर्नेचाहिँ सपना श्रेष्ठ, भाग्य राना श्रेष्ठहरू हुन् । ताप्लेजुङ, तमोर खोलाको पानी खाएर हुर्किएकी, झापादेखि काठमाडौंसम्म आएर आफैं करियर बनाएकी केटी आज यसरी निरीह भएकी छन् ।

छिमेकीहरूबाटै सांघातिक हमला हुँदासमेत श्रीमान्‌लाई उति चासो र चिन्ता छैन । न टेक्ने आड, न समाउने हाँगो भएपछि हेपिने नै भयो, चेपिने नै भयो । श्रीमतीको त वास्ता भएन रे ल । दुई छोरी बुनु उप्रेतीको मात्र हो ? उनीहरू छिमेकीबाट कुटिँदा श्रीमान्‌लाई वास्ता हुनु पर्दैन ? गत असारमा उनको अप्रेसन थियो । उपचारका लागि भर्ना भइन् मेडिसिटी अस्पतालमा । श्रीमान् दुबईबाट नेपाल आएको अरुले सुनाएर थाहा पाइन् । पछि अस्पताल आएर भागेरै हिंडे ।

*- बुनु उप्रेती (गायिका)*



## जीवनको रंग

हरि गजुरेल

# सुन्दरीहरूको अधिकतम सदुपयोग

उत्पादित सामान वा सेवा बिक्रीका लागि सेलिब्रिटीहरूलाई 'ब्राण्ड एम्बेसडर' नियुक्त गर्नु स्वाभाविकै मान्न सकिन्छ तर उक्त व्यवसायसँग 'गोरु बेचेको साइनो'समेत नगाँसिएका व्यक्तिलाई सद्‌भावना दूत बनाउने चलन चाहिँ अहिले नेपालमा नयाँ फेशनको रूपमा मौलाइरहेको छ । विभिन्न कर्पोरेट हाउसदेखि बैंक तथा वित्त कम्पनीहरूले महिलालाई यसरी 'ब्राण्ड एम्बेसडर' नियुक्त गरिरहेका छन् । 'रूपमती' अर्थात् नेपाल सुन्दरीहरूलाई मात्रै ब्राण्ड एम्बेसडर बनाउने होडबाजी निजी बैंक तथा वित्त कम्पनीबाट सरकारीतिर समेत सर्न थालेको देखिन्छ ।

कुनै समय सरकारी लगानीको राष्ट्रिय वाणिज्य बैंकले पूर्व मिस नेपाल श्रृंखला खतिवडालाई ब्राण्ड एम्बेसडर नियुक्त गरेको थियो । पछि त्यो जिम्मेवारी सऱ्यो अर्की नेपाल सुन्दरी अनुश्का श्रेष्ठमा । यसका अलावा बैंकले गायिका अस्मिता अधिकारीलाई समेत आफ्नो बैंकको प्रवर्द्धकका रूपमा अनुबन्ध गरेको छ । रमाइलोचाहिँ कृषि विकास बैंकमा देखिन्छ । उसले कृषिसँग साइनो नभएकी रक गायिका आश्रा कुँवरलाई ब्राण्ड एम्बेसडर नियुक्त गरेको छ । आश्रा र उपमा नामक ब्याण्डमार्फत रक गायनमा जमेकी आश्रा वातावरण अनुसन्धानकर्ता थिइन् । अहिले यो सौभाग्य पाएका छन् जितु नेपाल 'मुन्द्रे'ले । नेपाल बैंकले भने सुन्दरीलाई नरोजेर महावीर पुनलाई अनुबन्धित गरेको छ ।

श्रृंखला खतिवडाले केही समय भारतीय महिन्द्रा गाडीको नेपाल बिक्रेता अग्नि ग्रुपका निम्ति पनि काम गरिन् । मारवाडीको लगानी रहेको एनआइसी एसिया बैंकले अभिनेत्री मनिषा कोइरालादेखि केकी अधिकारीसम्मलाई विज्ञापनमा खेलाइरहेको छ । आफ्नै शेयर स्वामित्वसमेत भएका कारण होला एक दशकदेखि कलाकारद्वय मदनकृष्ण श्रेष्ठ र हरिवंश आचार्य सानिमा बैंकको ब्राण्ड प्रवर्द्धकका रूपमा देखिन्छन् । प्रभु बैंक जसिता गुरुङसँग जोडिँदा ग्लोबल आइएमइ बैंकले वर्षा सिवाकोटी र इ-सेवाले वर्षा राउतहरूलाई खेलाइरहेको छ । यस्तै स्वस्तिमा खड्काले पनि इ-सेवाकै ब्राण्ड एम्बेसडरका रूपमा काम गरिसकिन् । माछापुच्छ्रे बैंकले केही वर्षअघि अभिनेत्री श्वेता खड्कालाई 'ब्राण्ड एम्बेसडर' बनायो । सिटी एक्सप्रेसमा जितु नेपाल मुन्द्रेले अवसर पाएका छन् । घ्यू कहाँ पोखियो दालमाकै शैलीमा उनले मुन्द्रेको कमेडी क्लब चलाएका छन्, सिटी एक्सप्रेसलाई टाइटल स्पोन्सर राखेर । उता, माल्भिका सुब्बा, पूर्व मिस नेपाल सदीक्षा श्रेष्ठले एभरेष्ट बैंकको 'ब्राण्ड एम्बेसडर'का रूपमा काम गरिसकेका छन् । अधिकांश बैंक तथा वित्त कम्पनीहरूको रोजाइमा सेलिब्रिटी महिला नै नियुक्त हुन्छन् । थोरै बैंक तथा वित्तीय संस्थाले मात्र खेलाडी, राष्ट्रिय महत्वका व्यक्तित्व र पुरुष कलाकारलाई 'ब्राण्ड एम्बेसडर' बनाएको देखिन्छ । जस्तो ग्लोबल आइएमइ बैंकले दीपक दीपाको जोडी र मुक्तिनाथ विकास बैंकले धुर्मुस सुन्तलीको जोडीलाई काम लगाउँदै आएको देखिन्छ ।

## यो...

कुरामा पनि विभिन्न प्रकारका मत सार्वजनिक भएका छन् । खासमा पोलिसी भनेकै प्रिन्सिपल हो र प्रिन्सिपल भनेको पनि पोलिसी हो । सन् १९५५ देखि नै नेपालले पालना गर्दै आएको विषय हो, वन चाइना पोलिसी' । सन् १९५५ देखि १९७१ सम्म नेपालले अत्यन्त भोकल भएर एक चीन नीतिको समर्थनमा संयुक्त राष्ट्रसंघमा आवाज उठाएको थियो । एउटा स्वाधीन मुलुकको रूपमा रहिरहन चाहने हो भने नेपाल त्यसमा अडिग हुनै पर्छ । यो नेपालको परराष्ट्र नीतिको एउटा महत्वपूर्ण अंग पनि हो । संसारका धेरै मुलुकले समेत त्यसलाई स्विकारेका छन् भने चीनको संवेदनशील प्रान्त तिब्बतसँग सीमाना जोडिएको मुलुक हुनुका नाताले पनि नेपाल त्यसबाट दायाँ-बायाँ गर्ने अवस्थामा छैन ।

प्रधानमन्त्रीको भ्रमणमा नेपालले महत्वका साथ उठाएको अर्को विषय हो - सीमा नाका । अन्तर्राष्ट्रिय नाकालाई थप व्यवस्थित गर्ने र नयाँ नाका खोल्ने विषयमा चिनियाँ पक्ष सकारात्मक रहेको परराष्ट्र मन्त्रालयको दावी छ । चीनतर्फ नेपालको दुईथरी नाका छन् । द्विपक्षीय 'ट्रेड ट्रान्जिट ट्रिटी' अनुसार अन्तर्राष्ट्रिय हैसियत भएका छ वटा नाका छन् । जसमा ओलाङचुङगोला, किमाथांका, तातोपानी, रसुवा, कोरोला र पुरानो हिल्सा अन्तर्राष्ट्रिय व्यापारका लागि द्विपक्षीय सम्झौताअन्तर्गतका नाका हुन् । अर्को स्थानीय व्यापार, मेला र अर्मपर्मका हिसाबले आवश्यकताका आधारमा खोलिनुपर्ने परम्परागत नाका पनि छन् । आजभन्दा ४० वर्षअघि ती नाका खुल्थे र सीमाका चिनियाँले नेपालबाट सामान लगेर आफ्नो गुजारा टार्ने गर्थे । तर, अहिले त्यो स्थिति ठीक उल्टिएको छ । अब उताबाट सामान नआई नेपाली बाँच्न नसक्ने अवस्था छ । त्यस्ता नाका खोल्न दुवै पक्षबीच महत्वपूर्ण समझदारी भएको र छिट्टै काम शुरु हुने बताइएको छ । सँगसँगै उत्तरमा गाउँहरू अत्यन्त छिरोलिएका र दुर्गम छन् । त्यहाँ राष्ट्रिय ग्रिडको बिजुली पुऱ्याउन नेपाललाई अत्यन्त कठिन छ । चीनतर्फबाट बिजुली ल्याउन सक्दा सहज आपूर्ति हुनुका साथै सस्तो पनि पर्न जान्छ । त्यसका लागि चिनियाँ पक्ष सहमत भएको दाबी प्रधानमन्त्री कार्यालय छ । बिजुली पुऱ्याउन नसक्ने अवस्थामा स्थानीय तवरबाट सहायता लिएर स्थानीयस्तरमै सोलार प्लान्ट राखिदिने विषयमा पनि चीनले सहमति जनाएको छ ।

## नेपालबाट भारतमा बेचिँदैछन् गाडी !

नेपालमा गाडी उत्पादन हुँदैन । त्यसैले यहाँ गुड्ने गाडी विदेशबाटै आयात हुने गरेको छ । त्यसमा पनि अधिकांश भारतबाट आउँछ । हामीले सुनेको, देखेको भनेकै नेपालमा भारतबाट सानादेखि ठूला गाडी आयात हुन्छ भन्ने हो । नेपालबाट भारततिर गाडी बिक्री भइरहेका छन् भन्दा पत्याउन गाह्रो हुन्छ तर यहाँबाट नयाँ होइन, पुराना गाडी पारि गइरहेका छन् । पुरानाभन्दा कवाडी भन्ने बुझ्नुहोला । त्यो पनि होइन । गुडिरहेका । कण्डिसनका सवारी नेपाल र भारतका व्यवसायीबीच किनबेच जारी छ । इंग्ल्याण्डमा बनेर नेपालमा चलिरहेका पुराना ल्याडरोभर गाडी राम्रो दाममा खोजी खोजी भारतीयले किन्ने गरेको एक यातायात व्यवसायीले बताए ।

नेपालले २० वर्षे गाडीलाई चल्न चलाउन प्रतिबन्ध लगाए पनि भारतले भने छुट्टै नम्बर दिएर संरक्षण गर्ने गरेको यातायात व्यवसायीहरू बताउँछन् । 'यता नचल्ने अवस्थामा पुगेका ल्याडरोभर पनि उता १३ लाख रूपैयाँसम्ममा बिक्री हुने गरेको छ' नाम नबताउने शर्तमा एक व्यवसायी भन्छन्, 'उता भने भारतले प्रोत्साहन गरेर फरक नम्बर प्लेट दिने गरेकाले सोखिन व्यक्ति र पर्यटन व्यवसायीले अधिक खोज्ने गरेका छन् ।' सीमासम्म नेपाली नम्बर प्लेटमै गुडेर जाने यस्ता गाडी भारत प्रवेशपछि नम्बर हटाएर उतैको प्रयोग गर्ने गरिएको छ । इलामको पशुपतिनगर, माने भञ्ज्याङ, भैरहवा, वीरगञ्जलगायत खुला सीमा भएकाले सहजता हेरेर भारततर्फ सवारी साधन भारत बिक्री गरिन्छ । पुराना ल्याडरोभरबाहेक टोयोटाको विजे १४ पनि भारतीय व्यवसायीले राम्रो मूल्यमा खरिद गरिरहेकै छन् ।

# बिदामा श्रीमान्, एकपछि अर्को भुक्तमान

न्यायाधीश अनिलकुमार सिन्हा बिदामा बसेसँगै सर्वोच्च अदालतमा सात पद खाली हुन पुगेका छन् भने मुद्दाले ६ महिना लामो तारिखको फड्को मार्न थालेको छ। अवकाशको ३० दिन पहिल्यैदेखि बिदामा बस्ने प्रचलनका कारण सिन्हाले मुद्दा सुनुवाइ रोकेका छन्। उनी ६५ वर्ष पूरा भई कात्तिक २० मा अनिवार्य अवकाशमा जाने भएकाले प्रचलनबमोजिम एक महिनाअघि नै बिदा बस्न थालेका हुन्। अमेरिकास्थित छोराहरूसँग दसैं मनाउन उतै जाने र फर्केलगत्तै अवकाश लिने तयारी रहेको सर्वोच्च अदालत प्रशासनबाट थाहा भएको छ। घटस्थापनाको दिन असोज २८ देखि बन्द हुने अदालत कात्तिक १२ गते पूर्णिमाको भोलिपल्ट मात्रै खुल्नेछ।

सर्वोच्च अदालतमा यस वर्ष मात्रै १२ जना न्यायाधीशले अवकाश पाउने र नयाँ न्यायाधीशको समेत तत्काल नियुक्ति हुन नसकेका कारण मुद्दामा गम्भीर असर परिरहेको छ। प्रधानन्यायाधीशबाट हरिकृष्ण कार्की र न्यायाधीशकाट टंक मोक्तानले अवकाश लिइसकेका छन् भने ईश्वरप्रसाद खतिवडा, आनन्दमोहन भट्टराई र सुष्मालता माथेमासमेत अवकाशको मुखमा छन्। अन्तरिम आदेश लिनुपर्ने, तल्ला निकायको आदेश बदर गराउनुपर्ने वा कुनै विशेष महत्वका मुद्दामा समेत समयमा पालो नआउने रोग सामान्यझैं भइरहेका छन्। पुनरावेदन, दोहोऱ्याइपाऊँका निवेदन वा साधकजस्ता तलबाट आउने मुद्दाको सुनुवाइको बेहाल त छँदै छ, दैनिक २०-२५ वटा रिट र तल्ला अदालतका काम कारबाहीमा हुने निवेदनहरूको समेत समयमा सुनुवाइ हुन नसक्दा सर्वोच्च अदालत हुनु र नहुनुको औचित्यमाथि प्रश्न उठिरहेको छ।

एकल इजलासमा बस्नुपर्ने न्यायाधीशलाई समेत संयुक्त इजलास तोकिने गर्दा सुनुवाइमा गम्भीर प्रभाव पर्ने गरेको छ। संयुक्त, पूर्ण, विशेष वा संवैधानिक इजलासमा पर्ने न्यायाधीशलाई एकल पनि तोकिँदा गम्भीर असर परेको छ। उता, अन्तरिम आदेश लिएर बसेको पक्षको मुद्दा समेत वर्षौं पालो नआउने रोगको चर्चा गरिसाध्य छैन। सुर्खेतमा हालै सम्पन्न बार एशोसिएशनको राष्ट्रिय सम्मेलनले त संवैधानिक इजलास नियमित सञ्चालन गर्न माग नै गरेको छ।

# धर्मगुरुकै शैक्षिक प्रमाणपत्र धरापमा

नक्कली शैक्षिक प्रमाणपत्रले मुलुकमा आतंक मच्चाइरहँदा अर्का एक खिष्टियन धर्मगुरु पनि उक्त काण्डमा मुछिएका छन्। नेपाल खिष्टियन महासंघका निलम्बित अध्यक्ष चरीबाबु गहतराज (सिबी) को शैक्षिक प्रमाणपत्र नक्कली रहेको खुलेको छ। उनको शैक्षिक प्रमाणपत्र फर्जी भएको पुष्टि गर्दै त्रिभुवन विश्वविद्यालयले सूचना तथा प्रसारण विभागलाई पत्र पठाएको छ।ललितपुरको गोदावरीमा बस्दै आएका गहतराजको शैक्षिक प्रमाणपत्र छानबिनको माग गर्दै भदौ ३ गते उजुरी परेको थियो। 'महानअभियान' नामका पत्रिका दर्ता गर्ने बेला उनले स्नातक तहको नक्कली शैक्षिक प्रमाणपत्र पेश गरेको उजुरीकर्ताको आरोप छ।

उक्त उजुरी परेपछि छानबिन अगाडि बढाएको ढाँट्दै विभागले त्रिविबाट सबै डकुमेण्ट झिकाएको हो। समाजशास्त्रमा स्नातक गरेको भनी ढाँटी आएका उनको भण्डाफोर भएको छ। त्रिविले उनको रजिष्ट्रेशन नम्बर (५-०१-१४-०२६-१९९४) सँग मेल खाने अभिलेख नभएको प्रष्ट्याएको छ। भदौ २७ गते त्रिविले पठाएको पत्रमा भनिएको छ, 'चरीबहादुर गहतराज रजिष्ट्रेशन नम्बर (५-०१-१४-०२६-१९९४) को स्नातक डिग्रीको ट्रान्सक्रिप्ट, माइग्रेशन र प्रोभिजनल सर्टिफिकेट यस कार्यालयको रेकर्ड भिडाई हेर्दा मेल नखाएको।'

पशुपति बहुमुखी क्याम्पसबाट वि.सं २०५५ सालमा प्रथम श्रेणीमा उत्तीर्ण भएको प्रमाणपत्र नक्कली भएको प्रमाणित भएपछि विभागले कारबाही प्रक्रिया अगाडि बढाएको छ। विभागले उनको नक्कली प्रमाणपत्रबारे सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई जानकारी गराइसकेको स्रोत बताउँछ। यता, मन्त्रालयले उनलाई कारबाहीका लागि गृह मन्त्रालय र सिआइबीलाई पत्र लेख्ने तयारी गरेको स्रोतको भनाइ छ। 'खिष्टियन धार्मिक समुदायको मसिहा ठान्ने संस्थाका जिम्मेवार पदकै व्यक्तिको सर्टिफिकेट नक्कली छ, के भन्ने ? यसले धार्मिक समुदायमाथि नै चोट पुगेको छ। धेरै जानेबुझेका, वास्तविक अध्ययन गर्नेभन्दा आफूलाई विद्वान् तथा शिक्षित भन्न रुचाउँछन्। प्रमाणपत्र भने कीर्ते। खिष्टियन समुदायमा यस्तो ठूलै जमात छ', स्रोतले भन्यो। विभागका एक अधिकृतका अनुसार उनले जिल्ला प्रशासन कार्यालय, काठमाडौंमा पत्रिका दर्ता गरी विभागमा सूचीकृत गर्दा पेश गरेको प्रमाणपत्र नक्कली फेला परेको हो। उक्त प्रमाणपत्र प्रयोग गरी गहतराजले केही वर्ष पत्रिका सञ्चालन गरेको पाइएको भन्दै गहतराजमाथि विभागको कानुन शाखाले कारबाही थालेको उनले जानकारी दिए।

**बर्खास्तपछि पनि दादागिरी**

सिबी गहतराजलाई महासंघको अध्यक्ष पदबाट जानकारहरूको आरोप छ। 'बहुमतको आधारमा उनलाई निलम्बित गरिएको छ। जेठ १७ गते निलम्बन र साउन ३ गते निश्कासन गरिसकेकाले उनको वैधानिकता सकिइसक्यो। अब हटिसकेपछि मै अध्यक्ष भनेर दाबी गर्न मिल्छ ? उनले आफूलाई सुधार्नुको साटो झनै छुट्टै कमिटी गठन गरेपछि हामीले वाक्कदिक्क भएर निकालेका हौं। हामी विधानसम्मत चलेका छौं, त्यसैले डराउनुपर्ने कुरा नै छैन', महासंघका




केन्द्रीय समितिका ३० जना सदस्यले बहुमतका आधारमा हटाएका छन्। तैपनि, उनी सो निर्णय मान्न तयार छैनन्। उनले एक महिनाअघि महासंघको कार्यवाहक अध्यक्ष र भूतपूर्व महासचिवमाथि हातपात गरेका थिए। केटाहरू लगेर कार्यालयमै कुटपिटको वातावरण सिर्जना गरेपछि चर्को आलोचना भएको थियो। महासंघलगायत ईसाइ धर्मसम्बद्ध संघसंस्थाले गहतराजलाई बहिष्कार अभियान चलाएका छन्। उनले कानुन लत्याएर महासंघ कब्जा गर्न खोजेको एक पदाधिकारीले भने। यता, काठमाडौं प्रशासनले दुवै पक्षलाई राखेर छलफल गर्ने तयारी छ।

**पैसा सापटी लिने, फिर्ता माग्दा धम्क्याउने**

उनले पदको आडमा खिष्टियन अगुवाको पैसा सापटी लिएको र फिर्ता नदिएको महासंघका पदाधिकारीहरू बताउँछन्। पैसा फिर्ता माग्दा उल्टै धम्क्याउने, मुद्दा हाल्ने र दुःख दिने गरेको एक जना पीडितले बताए। आम्दानीको कुनै स्रोत नभए पनि करोडौंको सम्पत्ति भएको तिनको भनाइ छ।

## नयाँ...

नम्बरको मार्कर नक्साअनुसार नभएको कुरा उठेको छ। नेपाली पक्षले मान्नुहुँदैन थियो, तर पहिल्यै हस्ताक्षर गरिएकोले पाँच सय हेक्टर जमिनमा घाटा लागेको छ। अर्कोतिर, दुई देशको सीमासम्बन्धी अभिलेख संकलन गर्नमा नेपाली सेनाले चासो राखेको छ। यसअघि नापी विभागले सीमा संवेदनशीलतालाई दृष्टिगत गर्दै सशस्त्र प्रहरीलाई ग्लोबल पोजिसनिङ सिष्टम (जिपिएस) नै दिएको छ। भोलि कुनै किसिमको प्राकृतिक वा भौगोलिक विपत्ति आएको अवस्थामा नेपाली भूमिको यकिन विवरण अद्यावधिक गर्नुपऱ्यो भने उक्त प्रणाली काम लाग्ने कारण वैकल्पिक भण्डारणका रूपमा नापीले सशस्त्रलाई सो प्रणाली दिएको बताइन्छ।

उता, भएको नाका व्यवस्थापन नहुँदाको दुःख कस्तो छ भने, दोलखाको तिब्बती सीमावर्ती बिगु गाउँपालिका- ३ स्थित लामाबगरमा नयाँ नाका खुल्नासाथ सुनतस्करीले बितण्डा नै मच्चायो। त्यहाँ पुरानै नाका चलनमा थियो। भर्खरै अर्को नाका पनि सञ्चालनमा आयो। पहिलोपटक असोज १२ गते नाकाको पारिपट्टी जंगलमा लुकाएर राखिएको चार केजी सुन जिल्ला प्रहरीको टोलीले फेला पाऱ्यो। दिनैपिच्छे हुने गरेको तस्करीका क्रममा तीन दिनमा ११ केजी सुन फेला परेको छ। तस्कर टाढाका थिएनन्, गाउँले नै। उक्त सुनको कारोबारीका रूपमा त्यहींका चसमान तामाङ, नुर्बुछिरिङ शेर्पा, सुनमाला, पेम्बा तामाङहरू समातिएका छन्। भइरहेका सीमा नाका व्यवस्थित नहुँदा नेपालका निम्ति तस्करीको पिरलो, चीनका निम्ति भूराजनीतिक झमेलाको भारीमात्रै भएको छ। घोषित रूपमा नाका खुल्नुअघि दुबैतर्फका स्थानीय बासिन्दा राहदानीबिना सीमाको ३० किलोमिटरमात्रै आवतजावत गर्न पाउँथे। तर, औपचारिक सीमा नै खोलेपछि राहदानीसहित तस्करले सल्बलाउने मौका पाएका छन्। फलतः लामाबगरको वैकल्पिक नाका खुलेको १० दिनमै तस्करीको अकल्पनीय घटना भएको हो। नेपाली भूमिको प्रयोग गर्दै विदेशीले स्वतन्त्र तिब्बती गतिविधि सञ्चालन गर्दै आएका छन्। चीन सरकारले तिब्बतको संवेदनशीलताका कारण नेपालसँग जोडिएका चालु नाकाहरूलाई नै व्यवस्थित गर्नुपर्ने मान्यता राख्दै आएको छ। व्यापारिक गतिविधि बढ्ने लोभका कारण नेपाल नयाँ नाका चाहन्छ। तर, दोलखा नाकाले दुबै देशलाई झस्काएको छ।

## मदन...

उम्मेदवारी दिने काम गरियो। यही हो त अध्यक्षले बुझेको जबज ?', आक्रोशित हुँदै एक नेताले भने। तर, जबजले देखाएको बाटो र पार्टीले विकास गरेको प्रतिष्पर्धाको संस्कृतिले माथिबाट जतिसुकै निर्देशित गर्न खोजे पनि प्रदेशले असफल पारिदिएको उनको बुझाइ छ।

ओलीको चाहनाविपरीत चुनाव हुनु र नचाहेका व्यक्ति नेतृत्वमा आउनु वास्तवमा एमालेमा उहाँको शक्ति कमजोर बन्दै गएको संकेत पनि हो। किनभने माधव नेपाल, झलनाथ खनाल, वामदेव गौतमलगायत संस्थापक नेताहरूको ठूलो पंक्तिले छोडेर गएपछि विरोधी शून्य पार्टी चलाइरहनुभएका ओलीविरुद्धको विद्रोह पनि हो यो। यसले थप सन्देश के दिएको छ भने अब ओलीले भनेर पनि रोकिने अवस्था छैन। प्रदेशमा आफू अनुकूल नेतृत्व ल्याउन ओलीले आफूनिकट नेताहरूमार्फत ब्यापक शक्तिको दुरूपयोग गरेको पनि भनिंदैछ। सात दिनसम्म अधिवेशन लम्ब्याएर प्रतिनिधिहरूलाई थकाउने र माथिबाट घोषणा गर्ने प्रयास त्यसैको परिणाम हो भन्छन् नेताहरू। कतिपयलाई धम्क्याएर उम्मेदवारी फिर्ता लिन लगाएको गुनासो पनि उत्तिकै छ।

कर्णालीका राजबहादुर शाहीले उम्मेदवारी फिर्ता लिँदा दिएको अभिव्यक्तिले पनि कुन हदसम्म दबाब दिइएको रहेछ भन्ने थाहा हुन्छ। सर्वसम्मतिका लागि नेतृत्वले दबाब दिएको र यसका बाबजुद पनि उठेर जितिहाले नेतृत्वसंग काम गर्न अप्ठेरो हुने भएकाले स्वविवेकले मतदान गर्न आग्रहसहित उनले उम्मेदवारी फिर्ता लिएको घोषणा गरेका थिए। बागमतीमा केशरबहादुर बुढाथोकीलाई 'निर्विरोध हुनेवाला छ' भन्दै झुक्याएर उम्मेदवारी फिर्ता लिन लगाइएको र केशवराज पाण्डेलाई पनि 'नेतृत्वको आदेश' भन्दै दबाब दिइएको उनीहरू निकट कार्यकर्ताको गुनासो सुनिन्छ।

## उता...

महाशाखाको कमजोरीका कारण आतेआते राष्ट्रपतिले व्यहोरेको विवाद फेरि नदोहोरियोस् भन्नका लागि विश्वासिलो सहसचिवको खोजी हुँदा त्यसमा परेका थिए, शेरजंग। आफ्नो चाहनाले होइन, त्यताको मागबमोजिम उनी अख्तियारबाट सरुवा भएका हुन्। इन्दिराचाहिँ त्यहाँबाट सरुवा भई उर्जा मन्त्रालय र त्यहाँबाट पनि चिलिमे जलविद्युत परियोजनाको कानुन महाशाखामा कार्यरत छिन्।

जागिरजस्तै सुन्दर थियो, शेरजंगको परिवार। पत्नी शर्मिला नेपाल वायुसेवा निगममा २० वर्षभन्दा बढी समयदेखि परिचारिका (एयर होस्टेस) का रूपमा स्थायी सेवामा थिइन्। जीवनको अन्तिम रात शेरजंग बबरमहलस्थित घरमा एक्लै थिए। १४ वर्षीय छोरा अर्को कोठामा। ठूली छोरी एक महिनाअघि उच्च शिक्षा अध्ययनका क्रममा अमेरिका गएकी। पत्नी शर्मिला त्यही दिन काठमाडौं-दोहा उडानका कारण आकाशमै थिइन्। बिहान छोराले स्कूल जाने समय भएपछि बाबुको खोजी गरे। तर, उनी बोलेनन्, उठेनन्। के भयो भनी सोधखोज गर्ने क्रममा छिमेकी तथा वरिष्ठ अधिवक्ता भीमार्जुन आचार्यहरू भेला भए। ढोका खोल्दा अचेत अवस्थामा भेटिए। मुखबाट बान्ता गरेजस्तो फोहोर चिज निस्किएको थियो। त्यही अवस्थामा भीमार्जुनले उनलाई नजिकै रहेको नर्भिक अस्पताल पुऱ्याए। तर, अस्पतालले शरीरको सम्पूर्ण चाल बन्द भइसकेको जानकारी दियो। अर्थात्, उनको निधन भइसकेको थियो।

निधनपछि कर्मचारीबृत्तमा अनेकन चर्चा भएका छन्। पशुपतिनाथमा जडान गरिएको जलहरि प्रकरणमा तीन जनाका विरुद्ध अख्तियारले मुद्दा दायर गर्नुअघि सदस्य सचिव डा.मिलन थापाले एक धम्कीपूर्ण पत्र लेखी 'आत्मसम्मान तथा मौलिक हकमा ठेस लाग्ने गरी कारवाही गरेमा मलाई प्राण त्याग गर्न बाध्य बनाउनेहरूको नाम सार्वजनिक गर्नेछु' भनेका थिए। सोही पत्रमा उनले छानवीनका क्रममा अख्तियारका कतिपय कर्मचारीले आफूहरूमाथि बार्गेनिङ गरेको, पटक-पटक तनाव दिई 'अन्य किसिमबाट' अनुसन्धान गरेको जस्ता प्रसंग उल्लेख गरेका थिए। भनिन्छ, डा.थापाले कसैलाई नबिझाउने स्वभावका शेरजंगलाई नै लक्षित गरी उक्त पत्र लेखेका हुन्। र, उनी त्यसबाट उत्पन्न तनावबाट मुक्ति खोज्दै थिए। कर्मचारीबीच चलेको चर्चाअनुसार, बिहीबार राति उनी मदिरा सेवन गरी सुतेका थिए। यद्यपि, यी चर्चा वास्तविकताभित्रका थिए, थिएनन् यकिन छैन। बरु, नेपालका निजामती कर्मचारीको जीवनचर्याका केही कटु यथार्थबाट स्वयं शेरजंग पनि मुक्त थिएनन्। जस्तो- अनुसन्धानसँग सम्बन्धित सेवामा कार्यरत कर्मचारीले झेल्नुपर्ने तनाव, दबाब, प्रलोभन उनीमाथि पनि थियो। जिम्मेवारी बहन गर्ने सिलसिलामा कर्मचारीले व्यहोर्नुपर्ने यस्ता तनावको व्यवस्थापन गर्न सरकारले कुनै समय र सुविधा दिएको हुँदैन। तनावकै बीचमा काम गर्ने क्रममा रक्तचाप बढ्ने, मुटुको चालमा समस्या आउने, औषधी सेवन गर्नुपर्नेजस्ता अरु थुप्रै समस्याबाट उनी मुक्त थिएनन्। खानपान र बाहिरी मनोरञ्जनमा उनी अरु कर्मचारीको तुलनामा त्यति सक्रिय थिएनन्। तर, व्यक्तिगत तनाव व्यवस्थापन गर्न नसक्दा र सन्तुलित जीवनचर्या अपनाउन नसक्दा थुप्रै नेपाली युवाले अल्पायुमै जीवन गुमाउनुपरे जस्तै उनका हकमा पनि लागु भएको मान्न सकिन्छ।

## कमरेडहरूले...

उहाँको प्यानलका सबै पदाधिकारी आउन सकेनन्। महिला सचिव जितेकी भक्तकुमारी लामा पनि गोकुल पक्षकी थिइन्। अर्कातिर, कैलाश ढुंगेलको पक्षमा आनन्द पोखरेलहरूले च्यासलस्थित प्रदेश कार्यालय नै दुरूपयोग गरेको भन्दै चन्द्रागिरीका पूर्ववडाध्यक्ष सन्तोष खड्काहरूले तोडफोड गरे। उम्मेदवारहरूलाई खालि कागजमा सही गराइएपछि काठमाडौंबाट सदस्य पदमा उम्मेदवारी दिएका थुप्रैले सर्वसम्मतका नाममा अवसर गुमाउन पुगे। काठमाडौं- ४ (क) बाट प्रदेश सांसद रहेका जयराम थापाले सदस्य पदमा उम्मेदवारी दिएका थिए। तर, बूढानीलकण्ठका मेयर मीठाराम अधिकारीलाई सर्वसम्मत बनाउन उम्मेदवारी उनको जानकारीबिनै फिर्ता भयो। ४ नं. क्षेत्रबाटै संगम गहतराजले दिएको सदस्य पदको उम्मेदवारी एकाएक गायव भई उनको ठाउँमा मोहन बराइलीले जितेको घोषणा गरियो।

बागमती र कोशीका हकमा सीधासिधी केपी ओली र विद्या भण्डारीबीचको चुनाव भएको मानिन्छ। तर, अन्य प्रदेशका हकमा ओलीको उत्तराधिकारी हुने संघर्षले प्यानल-प्यानल बनाएर चुनाव भइरहेको एमालेको भनाइ छ। बागमतीमा गोकुल बाँस्कोटा आफैं उठ्न तयार थिए। तर, मापदण्डले नदिएपछि कृष्ण दाहाललाई उठाए। बेलैमा चुनाव गराइएको भए दाहालको पक्षमा प्रतिनिधि खुलेका थिए। ती प्रतिनिधिलाई मत्थर पार्न महासचिव शंकर पोखरेलले १३ वटै जिल्लाका अध्यक्षको गोप्य बैठक बोलाई कैलाशलाई जिताउने गरी काम गरेका थिए। कोशीमा माधव नेपालको साथ छाडेर एमालेमै बसेका घनश्याम खतिवडाले ओलीपक्षीय उम्मेदवार भई अध्यक्षमा त जिते। रमाइलो के भयो भने, अन्तिम अवस्थामा माधव नेपालको साथ छोड्ने नेताहरूचाहिँ घनश्यामको पक्षमा थिएनन्। विद्यापक्षीय उम्मेदवार भनिने विनोद ढुंगेलतिर पूर्वमाधव समूहका भीम आचार्य, यज्ञराज सुनुवारहरू खुलेर लागे। उक्त लडाइँ विद्या र ओलीकै बीचको थियो भन्ने कुरालाई भोजपुर, मोरङ र सुनसरीका प्रतिनिधिहरूको व्यवहारले देखाउँथ्यो। शेरधन राई विनोदको पक्षमा थिए भने सुनसरी र मोरङका धेरैजसो त्यतै लागे। तर, योगेश भट्टराई, बसन्त नेम्वाङहरू घनश्यामको पक्षमा देखिए। बरु, मोरङका अध्यक्ष ऋषिराम पोखरेल विनोदको पक्षमा त्यति खुलेनन्।

उता, कर्णाली प्रदेशको अध्यक्षमा ओलीद्वारा खडा गरिएका मीनबहादुर शाहीले पराजय भोग्दा अन्तिममा महासचिव शंकर पोखरेलका उम्मेदवार गुलाबजंग शाहले जिते। उम्मेदवार शंकरको भए पनि ओलीसँग 'स्थायी संघर्ष' गर्ने नेताका रूपमा चिनिने यामलाल कँडेलको साथ पाउँदा गुलाबले फराकिलो मतान्तर पाएको चर्चा छ। पार्टी काममा भन्दा बढी एनजिओका काममा सक्रिय मीनबहादुरसँग सांगठानिक मत कम, खानपिनबाट प्राप्त मतमात्रै हुँदा त्यो अवस्था आएको बताइन्छ। अर्थात्, जिल्ला-जिल्लाका नेताहरूले मीनबहादुरलाई स्वीकारेनन्। ओलीको आधिकारिक उम्मेदवार मीनबहादुर भएको अवस्थामा गुलाबजंग उठ्ने भनेपछि शंकरले दबाब दिन सकेनन्। गुलाबको पक्षमा प्रदेशका १९ केन्द्रीय सदस्य थिए। यामलाल कँडेल, भैरवसुन्दर श्रेष्ठ (जाजरकोट), लक्ष्मी पोखरेल (दैलेख), मोहन बानियाँ (मुगु) सहित हुम्लाका दल रावल, दल फडेरा र छक्क लामा उनीतिर लागे। जुम्लाका रतननाथ योगी मीनबहादुरतिर थिए, तर डोल्पाकी बदमी बोहोरा गुलावतिर भइन्। कालिकोटका नेशनल शाही मीनबहादुरतिर हुँदा इन्दिरा सञ्ज्याल गुलाबतिरै लागिन्। जाजरकोटका निरज आचार्य, दैलेखका विष्णु रिजाल मीनबहादुरतिर थिए। त्यस्तै, राजबहादुर बूढा, धर्मराज रेग्मी, सूर्यकुमारी श्रेष्ठ पनि गुलाबतिर भए। जाजरकोटका पोलिट्व्युरो सदस्य डम्बर सिंह र भेरीका मेयर सीपी घर्ती पनि गुलाबसँगै थिए। अधिकांश जिल्ला अध्यक्षले उनैलाई साथ दिए। सुर्खेतका मोहनमाया ढकाल, ठम्मर विष्टहरू गुलाबतिरै भए। नवराज रावतमात्रै मीनबहादुरतिर लागे। जिल्ला अध्यक्षमा रुकुमका नन्दलाल देवकोटा, सल्यानका गोविन्द पुन, जाजरकोटका खेमबहादुर शाही, दैलेखका रवीन्द्र शर्मा, डोल्पाका शेरबहादुर बूढासहित हुम्ला र मुगु पनि त्यतै लागे।

त्यसो त कर्णाली प्रदेशको नेतृत्वलाई लिएर ओलीले कुनै गम्भीर कसरत भने गर्नुभएन। उहाँ सोही कार्यक्रमका लागि सुर्खेत जानुहुँदा सीधै नगई नेपालगञ्ज ओर्लिनुभयो। कार्यक्रम सकिएपछि पनि सुर्खेतबाट नेपालगञ्जमा बास बस्न फर्किनुभएको थियो। तर, शंकर भने सुर्खेतमै बसेर गुलाबको पक्षमा माहोल बनाइरहेका थिए। पार्टीका प्रदेश इन्चार्ज लेखराज भट्टसँग गुलाबको पक्षमा भूमिका खेल्न शंकरले आग्रह गरेका थिए। ओलीले व्यक्तिगत रूपमा मीनबहादुरको पक्षमा दल रावलसहितका केन्द्रीय सदस्यलाई फोन गर्नुभयो। तर धर्मराज रेग्मी, छक्क लामासहित पूर्वमाओवादीहरू यामलालको पक्षमा हुँदा ओलीको प्रयास सफल भएन। राष्ट्रिय योजना आयोगका पूर्व सदस्य मीनबहादुरबारे शुरुमा ओलीकै धारणा पनि राम्रो थिएन।

यसरी हेर्दा लुम्बिनी, कर्णालीमा विष्णु र शंकर, गण्डकीमा खगराज र पृथ्वीसुब्बा गुरुङबीचको टकरावले चुनाव भएको देखिन्छ। अब पालो छ, उपत्यकास्थित विशेष प्रदेशमा। त्यहाँ शंकर र ईश्वरबीच टकराव हुने संकेत छ। शंकर पत्नी सुजिता शाक्य उक्त प्रदेशकी इन्चार्ज हुन्। अध्यक्षका दावेदार समीर नेपालचाहिँ ईश्वर निकटस्थ छन्।

*- विश्वमणि सुवेदी*

## सेनाका...

मागेका थिए। स्रोतका अनुसार यी दुवै अधिकृत एउटै बेसिकका हुन्। दुई हप्ताअघि भएको यो घटनालाई गुपचुप राखिएको छ।

## सरकारबाट...

हुन्। र, संघीय मन्त्रीका रूपमा क्षेत्र नं. ५ बाट जितेका प्रदीप पौडेलको नाम अगाडि सारिएको थियो। तर, ती नाममाथि न देउवा, न शेखर दुवैबाट वास्ता भएन। पहिला शेखरले गगनलाई दुश्मन ठान्दा नाम दिइएन। तर, शेखर आफू सिंगापुर जाने बेलामा दिएका नाममध्ये धनराज गुरुङहरू फर्किसक्दा मन्त्री भएका थिए। अब अप्ठेरो स्वयं धनराजहरूलाई पनि छ। कानुन मन्त्रीका रूपमा ज्यानमारा छुटाउन साक्षी बसेको भनी पार्टीभित्र रडाको शुरु भइसकेको छ। उपप्राध्यापक प्रेम चलाउनेमाथि खुकुरी हान्नेलाई सरकारले रिहा गरेको छ। खुकुरी हानेर मान्छे मारेका अभियुक्तहरू धमाधम छुटिरहेका मात्र हैनन्, तिनको स्वागत गर्न ठूलै राजनेता रिहा भएझैं नेताहरू नै फूलमालासहित जेल अगाडि उभिन थालेका छन्। यी तमाम उपद्रवलाई समयमै व्यवस्थापन नगर्दा देउवा विस्तारै विस्तारै अप्ठेरोमा पर्न थाल्नुभएको बताइन्छ।

यसै पनि दलीय व्यवस्थाप्रति वितृष्णा बढ्दो छ। राप्रपाकै तहबाट परिवर्तन हुँदैन भन्नेमा सबै विश्वस्त छन्। तर, राजनीतिक प्रणालीविरुद्धको वितृष्णा कसरी प्रकट हुन्छ भन्ने कुरा हेर्न प्रतीक्षा नै गर्नुपर्ने भएको छ। गाई, गोरु काटिँदा कोही पक्राउ परेनन्, कसैमाथि कारवाही पनि भएन। त्यसका कारणले कांग्रेसको एउटा धार नै नेतृत्वसँग चिढिएको छ। तीबाहेक सबै पार्टीभित्रका हिन्दूवादी मूल नेतृत्वप्रति असन्तुष्ट छन्। ०४६ र ०६२/६३ अघि राजतन्त्र यसरी नै अलोकप्रिय भएको थियो। अहिले त्यस्तो अलोकप्रियता दल र त्यसका नेताले हासिल गरिरहेका छन्। लाभको पदमा रहने, देउवा, प्रचण्ड, माधवले लाभ बाँडेर आफ्नो सञ्जाल विस्तार गर्ने। सबै पार्टीभित्रको परिवर्तनकारी शक्ति कमजोर हुँदै जाने स्थिति छ। लाभको पदमा जानेहरूले यो प्रणालीको पक्षमा सडकमा आउने सम्भावना हुँदैन।

आफैं वैकल्पिक प्रधानमन्त्रीका रूपमा गगन थापा अगाडि आउँदाआउँदै पछाडि हटेका छन्। उनले समाजवादी मोर्चालाई सरकार छाडिदिऊँ भनेको आफ्नो मिशन कामलाग्दो भएन भन्ने निश्कर्ष हो। प्रश्न उठ्छ- देउवाले गगनलाई प्रधानमन्त्री बनाउन ठाउँ दिनुहोला र! कोइरालाहरूले आफू भुँइमा बसेर गगनका लागि ठाउँ छाड्दै ताली पिट्लान्?

भनिन्छ, प्रचण्ड चीनबाट फर्किएपछि एमसिसी र बिआरआईको पासोमा पर्नुहुन्छ र त्यसैमा टेकेर केही गर्न सकिन्छ भन्ने राजावादीहरूको अनुमान असफल भएको छ। परिवर्तित परिस्थितिलाई कसरी आफ्नो अनुकूल बनाउने भन्नेमा ती अलमलमा छन्। उनीहरू बाठा हुन्थे, घटनाक्रम बुझ्थे भने धरानमा गोरु काटिँदा त्यहीँ आन्दोलन गर्नुपर्थ्यो। तर, त्यसो गर्न सकेनन् भनिँदैछ।

## दक्षिणदेखि...

दुवैतिर सम्बन्ध सुधारको प्रयासमा लागेको बताइन्छ। दक्षिणले नरुचाएको मधेसी नेताको छवि बनाएका उपेन्द्रले हालै झण्डै दुई साता लामो भारत भ्रमण गर्नुको उद्देश्य त्यही थियो भनिँदै छ। नयाँदिल्ली, मुम्बई हुँदै दक्षिण भारतको केरलादेखि बिहारमा लालु यादवसम्मलाई भेटेर आफ्नो गलामा झुण्डिएको 'भारतविरोधी' ट्याग हटाउने सक्दो प्रयास गरेका उपेन्द्र अहिले अमेरिकामा छन्। औपचारिक रूपमा त्यहाँ रहेका तराईवासी नेपालीहरूको कार्यक्रमका लागि भनेर निम्त्याइएका उनले राजधानी वासिङटन डिसी पुगेर विभिन्न कूटनीतिक भेटघाट पनि गर्ने तयारी छ। प्रतिस्पर्धी सिके राउत अमेरिका भ्रमणमा रहेकै बेला उपेन्द्र पनि त्यतै पुग्नुलाई यसै पनि अर्थपूर्ण मानिएको छ।

आखिर उपेन्द्रलाई भारत र पश्चिमाहरूले विश्वास नगर्नुको कारण के हो त? जानकारहरू भन्छन्, कम्युनिष्ट काखबाट बाहिर निस्कन नसकेको बुझाईले उनीप्रति फरक धारणा बनिरहेको छ दुवै शक्ति केन्द्रको। त्यसमा उपेन्द्रको व्यवहारले भन्दा पनि मधेसको राजनीतिले प्रभाव पारेको धेरैको विश्लेषण छ। किनभने मधेस आन्दोलनबाट स्थापित भएका उपेन्द्र आज पनि तराई-मधेसमा सबैभन्दा शक्तिशाली छन्। उनलाई कमजोर नबनाएसम्म आफ्नो हित नदेखेका प्रतिस्पर्धी पार्टी र नेताहरूले नै 'चिनियाँ एजेन्ट' को ट्याग लगाइदिएपछि दक्षिण र पश्चिम भड्किएको बुझाइ जसपाका नेताहरूको छ। खासगरी महन्थ ठाकुरहरूले लैनचौरलाई गलत रिपोर्ट गरेकाले दक्षिणसँगको सम्बन्ध बिग्रिएको जसपाका एक नेताले बताए।

उपेन्द्रको भारत र अमेरिका भ्रमण आफूमाथि छरिएका भ्रम हटाउनमा केन्द्रित रहेको जसपाका एक नेताले अनौपचारिक संवादमा खुलाए। 'चाइनिज ट्यागबाट इण्डियाले खेदेको खेदै गऱ्यो, सप्तरीमा त चुनाव नै हराइदियो। त्यसपछि अध्यक्षज्यूले अब यथार्थ कुरा भन्नुपर्छ भन्ने लागेर प्रयत्न थाल्नुभएको बुझेको छु', निकै खुलस्त कुरा गरेका ती नेताले नाम नलेख्न आग्रह गरे।

हुन पनि उपेन्द्रलाई चुनाव हराउन भारतीयले वीरगञ्जमा अ॰ नै जमाएर ठूलो धनराशि खर्च गरेको तथ्य लुकेको छैन। महावाणिज्य दूतहरूकै अगुवाइमा 'उपेन्द्र हराऊ अभियान' चलाइएको चुनावलगत्तै बसेको जसपाको एक बैठकमा नेताहरूले रिपोर्टिङ गरेका थिए। मतदातालाई पैसा बाँड्नेदेखि मिडिया किन्नेसम्मका काम भारतीयको प्रत्यक्ष संलग्नतामा भएको जसपाका नेताहरू आज पनि बताउने गर्छन्। कतिसम्म भने उपेन्द्रका खास भनिएका ठूला नेताहरूले समेत महावाणिज्य दूतावासबाट पैसा बुझेको रिपोर्ट उपेन्द्रकहाँ त्यतिबेलै पुगेको हो।

अर्कोतिर चिनियाँ ट्याग लागे पनि प्रचण्ड र केपी ओलीको तहमा उपेन्द्रले उत्तरको विश्वास आर्जन गर्न सकेका छैनन्। उनी अहिलेसम्म चीन भ्रमणमा नजानुले पनि उत्तरले पत्याइरहेको छैन भन्ने नै बुझिन्छ। जबकि माओवादी र एमालेका ठूलादेखि साना नेता लगातार चीनतिर आउजाउ गरिरहेका छन्। त्यसो त, चीनले वामपन्थीलाई मिलाउन प्रयास गरिरहेको चर्चाका बीच समाजवादी मोर्चामा रहेका उपेन्द्रलाई त्यहाँबाट बाहिर निकाल्ने प्रयासअनुरूप लामो भारत भ्रमण गराएको भन्नेहरू पनि उत्तिकै छन्।

## तीज...

र उपायको खोजी गरेको? के यस्तै गरेर देश चल्छ? भित्रभित्रै चलिरहेको असन्तुष्टिको प्रवाह कतिसम्म तेज छ भनेर कसैले सोचेका छैनन्। किन नेताहरू स्वयं नै जातीय तथा धार्मिक सौहार्द्रता खल्बल्याउने प्रयास भइरहेको छ भन्दै छन्? परिस्थितिको जायजा लिन यही वक्तव्य काफी छ नि!

अरु कुरा पनि छन् भन्नैपर्ने। लुम्बिनी प्रदेश र बागमती प्रदेशपछि अब सबै प्रदेशमा देखाउनकै लागि भए पनि थोपरिएको नेतृत्व स्वीकार नहुने परिस्थिति एमालेमा निर्माण भएको छ। अहिले बनेको यो परिस्थितिको सन्देश सकारात्मक छ। अबका दिनमा सक्षम व्यक्तिले नेतृत्वमा प्रतिस्पर्धा गर्नबाट वञ्चित हुनुपर्ने अवस्था अन्त्य गरिदिएको छ। मूल नेतृत्वले यो कुरा कत्तिको बुझेको छ कुन्नि। कुनै पनि कुराको सीमा हुन्छ। भावनात्मक भएर भन्दा अति साह्रै नगर्नु भनिन्छ तर सिद्धान्तको हिसाबले भन्दा अलोकतान्त्रिक चरित्र बेठीक हो। एमालेले धेरै काम कारबाही लोकतान्त्रिक विधिभन्दा बाहिर गएर गऱ्यो भनी एमालेबाहेकका सबैले भन्छन्। एमालेभित्रै पनि, तर अफ दि रेकर्ड, यस्तो भन्ने धेरै छन्। देशको उच्चतम न्यायालयको त फैसला नै छ भलै त्यो एमालेको एउटा पंक्तिले नमान्ला। स्वर्गीय सुवासचन्द्र नेम्वाङले पनि जीवनको अन्तिमतिर नेतृत्वको थिचोमिचोबारे एक समारोहमै प्रतिवाद गरेर जानकारी गराएका थिए। हिन्दीमा एउटा प्रख्यात भनाइ छ 'जब जागा तब सवेरा'। नेकपा (नेकपा) धुजाधुजा भएको पनि अलोकतान्त्रिक, तानाशाही, दम्भी र मैमत्तावादी चरित्रको कारणले नै हो। प्रवृत्ति अझैसम्म सुधारिएको देखिन्न तर त्यसप्रति असहमति प्रकट हुन शुरु भएका छन्। यो राम्रो संकेत हो।

नेकपा (एमाले), माके र एसले पनि विभिन्न नामका अभियानहरू चलाइरहेका छन्। यसको अन्तिम एपिसोड एसले चलाएको छ। तर यिनीहरूका अभियान केवल मेरो/हाम्रो दलमा आबद्ध हुन आउनुस् भन्ने विषयमा केन्द्रित छ। जनजीविकाका मुद्दा यी अभियानमा देखिन्नन्। तीज किन फिक्का भयो यसपटक भनेर यिनले मन्थन गर्दैनन्। दसैंमा खसी काट्ने योजना छ कि छैन भनेर पनि सोध्दैनन्। कसरी के भनेर, फकाएर हुन्छ कि लोभ्याएर हुन्छ पार्टी प्रवेश गराउने धन्दा चलिरहेको छ अभियानको नाममा। महँगाइबारे के छ धारणा? अहँ, चुप। बेरोजगारीबारे के छ धारणा? अहँ, चुप। गरिबीबारे के छ धारणा? अहँ, चुप। यही हो समाजवादी चिन्तन र काम? यस्तै हुन्छ संगठन बनाउने/विस्तार गर्ने तरिका? यसरी निर्माण हुन्छ समाजवादी संस्कृति? जनतालाई अपिल गर्ने के तत्व छ आज यहाँहरूसँग र जनता तपाईंहरूको संगठनमा आबद्ध हुनलाई! जनताले आशा गर्ने, भरोसा गर्ने आधार के छ? एकले अर्कोलाई गाली गर्ने, खुइल्याउने, कम्युनिष्टलाई, कम्युनिष्ट विचारधारालाई बदनाम गर्नेबाहेक जनतालाई लाभ अन्य हुने कुनै काम भएको छ? छैन। ओली, माधव र प्रचण्डका स्टेटमेन्ट सुनौं- थाहा भइहाल्छ। जनतालाई अपिल गर्ने केही कुरा हुन्छ। पहिलो त विचारधारा र त्यसलाई लागू गर्ने योजना र नेतृत्व हो। दोस्रो भनेको नेतृत्वको स्वच्छ छवि र आचरण हो र तेस्रो भनेको जनतासँग भिजेका कार्यकर्ता हुन्। के आजको नेतृत्वले कुनै पनि प्रकारका दाग लागेका मानिसलाई बिनाकुनै बहाना पार्टीको काम कारबाहीबाट बाहिर राख्न सक्छ? के मैले भ्रष्टाचार गर्दिनँ भनेर स्पष्ट पार्न सक्छ? आचरण, व्यवहारले आफूलाई वामपन्थी हो भनेर खरो उत्रिन सक्छ? यसकारण आजको समस्या तल होइन माथितिरै छ। पानी र पार्टीलाई स्वच्छ राख्ने माथि नै हो। जति धेरै माथि स्वच्छ, उति धेरै तल सफा।

## सकुञ्जेल...

परेको कार्यालयमा नजाने अड्डी लिएसँगै बरालले थमौती पाएका छन्।

निरौलाले निजामती वृत्तमा बदनाम केदार देवकोटालाई अर्थबाट बूढानीलकण्ठ नगरपालिकाको लेखा अधिकृतमा सरुवा गर्ने कामसमेत रमाना लिएर हिँडिसकेपछि गरेको बाग्मतीका कर्मचारीले जनआस्थालाई बताए।

यस्तै, प्रदेशका १२ जना कर्मचारीलाई एक तह बढुवा गराउँदा लाखौं लाभ लिएको बताइन्छ। बाग्मती प्रदेशको प्रमुख सचिवबाट आपूर्ति मन्त्रालयमा आउनुअघि निरौलाले तीन जना भतिजलाई यातायात कार्यालयमा तैनाथ गराएको भेटिएको छ। यसरी लामो समयसम्म भक्तपुरको राधेराधेमा रहेर त्यहाँका ट्रायल सेन्टरबाट मिलेर उठाउन पल्किएका भतिज शिव निरौला खुर्कोट कार्यालयमा सारिएका छन्। यसो गरिनुको मुख्य कारण नै त्यहाँ खुल्न लागेको नयाँ ट्रायल सेन्टर हो। वर्ष दिनअगाडि देखि नै तयारी भएर हालै मात्र टेण्डर नोटिस निकालिएको यो ट्रायल सेन्टरमा झण्डै ५ करोडको खेतीपाती छ भन्छन्, यातायातका कर्मचारी।

सोहीअनुसार सातौं तहका अधिकृत निरौलाकै डिजाइनमा खोलिएको टेण्डरमा एउटा मात्र कम्पनीले भाग लिएको छ। यस्तै, अर्का भतिजलाई चाबहिलस्थित यातायात कार्यालयमा लगिएको छ। त्यहाँ पाँचौं तहका उनै केशव निरौला अहिले हर्ताकर्ता छन्। भने सातौं तहका बद्री निरौलालाई गुर्जुधारा यातायातको हर्ताकर्ता बनाइएको छ।

उता मुकुन्दकै पालामा जबर्जस्ती खटाइएका ३० कर्मचारीको कारण बाग्मती प्रदेशमा लफडा निस्किएको छ। लोकसेवा आयोगमाथि समेत प्रश्न उठ्ने गरी अर्को नासु ३० वर्षदेखि एउटै कार्यालयमाथि बसिरहेको भेटिएको छ। अधिकांश कर्मचारी बढीमा एकदेखि दुई वर्षमै सरुवामा पर्छन् तर यातायातका केशव जमरकट्टेल (जेके) ०५९ सालदेखि त्यही कार्यालयमा डेरा जमाएर बसेका छन्।

## उता...

गरियो। सशस्त्र प्रहरीको टोली पनि पुग्यो। बन्दीहरूले प्रहरीमाथि नै आक्रमण गरे। स्थिति नियन्त्रणमा लिन सुरक्षाकर्मीलाई हम्मेहम्मे परेको थियो। रातको समय त्यति ठूलो घटना हुँदासमेत लुम्बिनी प्रदेश प्रमुख उमेशराज जोशीले थाहा पाएनन्। बुटवलस्थित क्वार्टरमा रहेका उनलाई फोनबाट जानकारी गराइयो। निद्राको सुरमै बोलेका उनले जानकारी त पाए तर, घटनास्थलतिर गएनन्। भोलि बिहान १० बजेसम्म पनि नआएपछि अपरेशन एआइजीले फोन गर्दा बल्ल भालुवाङ आइपुगेको बताएका थिए।

'बाँकेमा राति त्यत्रो घटना भयो। उहाँले थाहा पाउनुभएन छ। बुटवल जानुभएका उहाँलाई फोन गरेर जानकारी गरायौं। मस्त निद्रामा हुनुहुँदो रहेछ। आउनुहुन्छ होला भनेर बाटो हेरिरह्यौं, भोलिपल्ट बिहान फोन गर्दा त भालुवाङ आइपुगेको भन्नुहुन्छ। घटना नियन्त्रणमा लिएपछि आएर के फाइदा? यस्ता त प्रहरी प्रमुख छन्, के भन्ने?', - सशस्त्रका त्यही क्षेत्र हेर्ने डिआइजी अभिकुमार खत्रीले बताए। सुधार गृहमा एक बन्दीले ज्यान गुमाउँदासमेत उनलाई कुनै फरक नपरेको ती अधिकृतको भनाइ छ। आफूभन्दा जान्नेबुझ्ने कोही नभएको घमण्ड गर्दै आएका उनको क्षमतामाथि प्रहरी संगठनभित्र औंला उठाउन थालिएको छ। जन्मेदेखि चाँदीको चम्चाले खाएको भनी धाक देखाउने उनले अरुले मिहिनेत गरेको कामलाई समेत आफ्नो भनी 'ट्याग' दिँदै आएका छन्। एमएस्सी पास गरेर प्रहरी सेवामा छिरेका उनी शेरबहादुर देउको जिल्ला डडेल्धुरावासी हुन्।

**जिल्लाबासीलाई काखा, अरुलाई पाखा**

सुदूरपश्चिम प्रदेशका डिआइजी भरतबहादुर बोहोरा पनि काम गर्नभन्दा काखापाखा लगाउनमै व्यस्त छन्। बझाङका बोहराले आफ्ना जिल्लावासीलाई छानिछानी सरुवा र बिदा दिने गरेको गुनासो छ। शेरबहादुर देउवा नेतृत्वको सरकारले काठमाडौंको एसएसपीसमेत बनाएका उनी बीचैमा झिकिएका थिए।

*- अनुशा थापा*

## कहिले...

क्षेत्रमा पुनः चुनाव गर्नुपर्ने अवस्था बनेको हो। त्यस्तै, दुई जिल्ला समन्वय प्रमुखसहित रिक्त पालिका प्रमुख, उपप्रमुख, वडाध्यक्ष र सदस्य पनि उपचुनावबाट पदपूर्ति गर्नुपर्नेछ। हाल कैलाली र ओखलढुंगामा जिसस प्रमुख खाली छ। त्यस्तै, काठमाडौं महानगरपालिका-१६ का वडाध्यक्ष मुकुन्द रिजालको निधन भएकाले त्यहाँ पनि उपचुनाव गर्नुपर्ने अवस्था छ।

प्रमुख निर्वाचन आयुक्त दिनेश थपलियासहित आयोगका पदाधिकारीहरूको टोलीले हालै प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डलाई भेटेर यसबारे जानकारी गराइसकेको छ। प्रधानमन्त्रीले राष्ट्रियसभाको निर्वाचनपछि रिक्त २२ स्थानमा चुनाव सम्पन्न गर्नेगरी तयारी थाल्न सुझाएबमोजिम वैशाखमा उपचुनावको मिति तोकिने सम्भावना रहेको आयोग स्रोतले जनाएको छ। यता, स्थायी सदन राष्ट्रियसभाका एकतिहाइ सदस्यको फागुन २० गते सकिँदै छ। त्यसअघि नै माघ दोस्रो साता निर्वाचन गर्नेगरी छठलगत्तै मिति तोक्ने तयारीमा निर्वाचन आयोग छ। गोलाप्रथाद्वारा कार्यकाल टुंगो लाग्ने राष्ट्रियसभाका एकतिहाइ सदस्यको प्रत्येक दुई वर्षमा पद खाली हुन्छ भने निर्वाचनमार्फत रिक्त पदपूर्ति गरिने व्यवस्था छ। यसपटक अध्यक्ष गणेश तिमिल्सिनासहित १९ जनाको पद खाली हुँदै छ।

## यस्तो...

राहत तथा बालविकास सहजकर्ताहरूले आन्दोलन जारी राखेपछि सय प्रतिशत नै आन्तरिक प्रतिस्पर्धाबाट बनाइएको हो।

शिक्षक महासंघ, राहत शिक्षक तथा बालविकास सहजकर्ताहरूसँग भएको सहमतिलाई इमान्दारिताका साथ कायम गर्ने हो भने तत्कालका लागि २० देखि ३० अर्ब रुपैयाँसम्म राज्यलाई थप व्ययभार पर्ने देखिन्छ। यदि यो पुरा गर्नेतर्फ लागियो भने मौजुदा विकास बजेट र प्रशासनिक बजेटको स्वरुप नै फेरबदल गर्नु पर्ने हुन्छ। कतिपय निकायले पेन्सन दिन नसकेर गोल्डेन ह्याण्डसेकको नाममा उपदानसहित बिदा दिएको छ भने २०६५ सालयता नियुक्ति निजामती कर्मचारीहरूलाई त झन् पेन्सन नपाउने व्यवस्था गरिएको छ। शिक्षकहरूसँग गरिएको सम्झौताले यस्ता सबै कुरालाई बेवास्ता गरेको देखिन्छ।

सहमतिबारे एक जना शिक्षाविद् भन्छन् 'जसले जे माग्यो त्यही राज्यले पुऱ्याउँदै जाने हो भने केचाहिँ बाँकी रहन्छ? मुलुक कसरी चल्छ?' प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्ड विदेश भ्रमणमा रहेको बेला गरिएको शिक्षक आन्दोलनसामु सरकार झुकेपछि यस्तो शर्त पूरा गर्ने सहमति भएको हो।

सहमतिको एक अर्को बुँदामा शिक्षकको विशिष्ट श्रेणीको पद सिर्जना गर्ने भनिएको छ। यो सहमति अब क्याम्पस र विश्वविद्यालयमा अध्यापन गर्ने प्रोफेसर र लेक्चररहरूले यही पदको माग गरे भने कसरी पुरा गर्ने भन्ने सवाल खडा भएको छ। विद्यालयका शिक्षक, क्याम्पसका प्रोफेसर र निजामती सेवाका विशिष्ट श्रेणी जोड्दा राज्यलाई निकै ठूलो आर्थिक भार थपिनुका साथै मर्यादाक्रममा पनि समस्या हुने देखिन्छ। शिक्षा सचिव विशिष्ट श्रेणी, स्कूलका शिक्षक पनि विशिष्ट श्रेणी, दुवैको समान स्तर भएपछि कसैले कसैलाई नटेर्ने अवस्था पनि आउन सक्छ।

सहमतिमा सबै शिक्षकले अस्थायी भई काम गरेको अवधिलाई पनि सेवा अवधिमा सामेल गर्ने भन्ने पनि छ। यस्तो कुरा निजामती सेवामा रहेकाको हकमा भने लागू भएको छैन। २०५२ सालदेखि २०५९ सालसम्म शिक्षकको स्थायी दरबन्दी कायम नभएको र परीक्षाको नतिजा पनि नआएकाले त्यसबेला अस्थायी पदमा कार्यरत शिक्षकहरूलाई ७ वर्षको अवधि गणना गर्नु जायज भए पनि अरुका हकमा भने यो मेल खाने देखिन्न। त्यसैगरी राहत शिक्षकहरूको पनि सेवाअवधि गणना गर्दा राज्यमाथि आर्थिक व्ययभार थपिन्छ। शिक्षा सेवा आयोगमा जाँच दिएर फेल भएका, दल वा नेतामार्फत शिक्षक भएका सबैको सेवाअवधि गणना गर्दै लैजाने आन्दोलनबाट उम्केर आर्थिक संकटमा मुलुक फस्ने खतरा पनि देखिँदैछ। अब खुल्ने शिक्षक कोटामा आन्तरिक प्रतिस्पर्धाबाटै पदपूर्ति गर्दा शिक्षक बन्न चाहना गर्नेहरूले कोइलाखात वा खाडी जानुबाहेक रोजगारीको विकल्प छैन। बेरोजगारलाई प्रतिस्पर्धाको अवसरबाट बञ्चित गराउनु नाजायज नै ठहरिन्छ। कतिपय बालविकास शिक्षकले अध्यापन अनुमतिपत्र नै लिएका छैनन्। दातृ निकायले सहयोग गरेको अवस्थामा उनीहरूलाई शिशु कक्षा सञ्चालन गर्ने सहजकर्ता, सहयोगी वा कर्मचारीको रुपमा हेरिन्थ्यो। नियुक्ति स्थानीय सरकारले त्यत्तिकै गरेको हो तर अहिलेको सम्झौताका कारण उनीहरूलाई पनि शिक्षक शिक्षिकाको दर्जा दिनुपर्ने, काम गरेको अवधि गणना गर्नुपर्ने र पेन्सन दिनुपर्ने अवस्था सिर्जना भएको छ। प्रधानमन्त्री प्रचण्डले चाँडै आन्दोलनकारीसँग वार्ता गरेर समस्या सुल्झाउन चीनबाटै रक्षामन्त्री पूर्णबहादुर खड्का, शिक्षामन्त्री अशोक राई, गृहमन्त्री नारायणकाजी श्रेष्ठलगायतलाई निर्देशन दिनुभएको थियो। गृहमन्त्री भने दुई-चार दिन आन्दोलन गर्दै गरुन्, जेमा पनि सम्झौता हुनुहुन्न, राज्य कमजोर बन्नु हुन्न भन्ने अडानमा थिए। वार्ताको बेला पनि उनी जे पायो त्यही सम्झौता नगर्ने पक्षमै थिए। तर प्रधानमन्त्रीको आन्दोलनलाई सेटल गर्नु भन्ने निर्देशनकै बीच संसदमा विधेयक छ, सांसदले पनि यस विषयमा बुद्धि पुऱ्याउलान् नि भन्दै सहमतिमा पुगेको स्रोतको दाबी छ। वार्तामा बसेका शिक्षकहरूसँग गृहमन्त्री श्रेष्ठ तपाईंहरू आफैं यो विषयमा लबिङ गर्नुहोस्, सरकारले नहुँदो कुरामा लबिङ गर्न सक्दैन भनेर झर्किएका थिए। यसै कारणले निजामती कर्मचारीसम्बन्धी विधेयक संसद्मा टेबल नहुने भएको छ। किनभने टेबल हुनेबित्तिकै कर्मचारीहरू पनि आन्दोलनमा उत्रिने अवस्था छ। सबैलाई कानुन बनाउँदा चित्त बुझाउन सकिँदैन, देश र जनताको हित, राज्यको सामर्थ्य र आर्थिक अवस्थालाई पनि ध्यान दिनुपर्ने हुन्छ तर त्यस्तो कसैले सोचेको देखिएन। प्रस्तावित निजामती कर्मचारीसम्बन्धी मस्यौदा विधेयकमा नायब सुब्बाहरूलाई सोझै अधिकृत बनाउनु पर्ने मागलाई समावेश गरिएको छैन। त्यसैगरी पेन्सनलगायतका विषयमा पनि कुनै प्रावधान उल्लेख नगरिएकाले कर्मचारीहरू सोझै आन्दोलित हुनसक्ने अवस्था छ।

अहिले सरकारले शिक्षकहरूलाई नियमित तलब दिन नसकेको र चार-चार महिना कुर्नुपर्ने अवस्थामा यस्ता आर्थिक व्ययभार वृद्धि हुने सहमति लागु हुने कुरामा भने धेरैले शंका नै गरेका छन्। सहमतिमा प्रस्तावित विधेयकमा छुटपुट भएका अन्य विषयलाई पनि संसदीय प्रक्रियामार्फत् समावेश गर्ने भनिएको छ। यसका लागि प्रतिनिधि सभाका माननीयहरूसँग लबिङ सुरु भएको बताइन्छ।

***- कौशल चेम्जोङ***

## उड्ने...

त्यसमाथि भारतले जिम्मा लिएका कारण ती हेलिकोप्टर अबको ६ देखि ९ महिनामा तयार हुन्छन्। त्यसपछि उडाएरै नेपाल ल्याइने भएको छ। हेलिकोप्टर मर्मतका लागि ४७ करोड रकम छुट्याइएको छ। ती हेलिकोप्टर खरिद गर्दा एउटाको २० अर्ब पर्छ।

## माओवादीमा...

*'कांग्रेसलाई चिढ्याएर जानु हुँदैन। अमेरिकालाई पनि ब्यालेन्स गर्नुपर्छ।' एमसिसीभन्दा चार महिना पहिले हालका अर्थमन्त्री तथा कांग्रेस नेता डा प्रकाशशरण महत परराष्ट्रमन्त्री भएका बेला नेपालले बिआरआईमा हस्ताक्षर गरेको हो। माओवादी केन्द्रले संस्थागतरूपमै त्यसलाई स्वीकार गरिसकेको अवस्था छ। प्रधानमन्त्री स्वयं बिआरआई परियोजना अघि बढाउन तयार भएर योजना आयोगलाई गृहकार्यको जिम्मा दिइसकेको अवस्थामा शक्ति बस्नेतहरू त्यसविरुद्ध उभिएपछि माओवादीमा नयाँ तरंग पैदा गरेको बताइन्छ। स्मरण रहोस्, शक्ति तिनै पात्र हुन् जसले एमसिसी सम्झौता संसदबाट अनुमोदन गराउन पार्टीभित्र चर्को लबिङ गरेका थिए।*

*२६ गते पदाधिकारी बैठकमा बिआरआई गर्न ढुक्कै देखिनुभएका प्रधानमन्त्री प्रचण्ड ३० गते अमेरिका हिँड्ने बेलासम्म पुग्दा भने निकै गलिसक्नुभएको थियो। त्यसबीच सत्ता साझेदार कांग्रेस सभापति शेरबहादुर देउवा, अर्थमन्त्री डा. महत, परराष्ट्र मन्त्री एनपी साउदले पटक-पटक भेटेर अमेरिकी चासो प्रष्ट शब्दमा सुनाएपछि परिस्थिति मोडिएको माओवादी नेताहरूको बुझाइ छ। त्यही दबावका कारण बेइजिङमा सम्झौता हुन नसकेको तथ्य पनि विभिन्न ढंगले बाहिर आइसकेको छ। कतिसम्म भने समकक्षी लिसँगको एकल भेट र प्रतिनिधिमण्डलस्तरीय वार्तापछि संयुक्त विज्ञप्ति जारी गर्न चीन तयार भएन। पछि बिआरआईलाई नेपालले सैद्धान्तिकरूपमा स्वीकार गरेको एउटा बुँदा थपेर बल्ल १३ बुँदे विज्ञप्ति जारी भएको हो।*

*भ्रमणमा निस्कनुअघि कम्तीमा बिआरआइका चार वटा परियोजनामा सम्झौता गर्ने तयारी थियो। सोहीअनुसार योजना आयोग र चिनियाँ पक्षबीच समन्वयमा गृहकार्य भैरहेको थियो। तर, यौटै प्रोजेक्टमा हस्ताक्षर भएन। क्रस बोर्डर ट्रान्समिसन बनाउने कुराबाहेक अरु विषयमा पनि चर्चायोग्य सहमति हुन सकेन। भनिन्छ, बिआरआईको एउटा मात्रै परियोजना अघि बढेको भए पनि प्रधानमन्त्री काठमाडौं आइनपुग्दै सत्ता समीकरण बदलिन सक्थ्यो। किनभने बरु प्रधानमन्त्री त्याग्न तयार तर एमसिसी नछोड्ने तहमा उतिबेलै अडान राख्नुभएका देउवाका लागि विदेशी दबाब झेलेर प्रचण्डलाई च्याप्ने स्थिति थिएन। अर्कोतिर भुटानी काण्डमा बालकृष्ण खाँण समातिएको विषयमा देउवाको चित्त दुखाइ अझै मेटिएको छैन। यो सबै परिस्थितिले अप्ठेरोमा परेका प्रधानमन्त्रीले थप रिश्क लिन नचाहेर बिआरआई थाती राखेको बुझिन्छ। चिकित्सक र शिक्षकहरूको आन्दोलन रोक्न प्रधानमन्त्रीले चीनबाटै तारन्तार मन्त्रीहरूलाई फोन गरेबाट पनि सरकार ढल्ने चिन्ताले उहाँ तनावमा रहेको प्रष्ट हुन्छ। बताइएअनुसार उहाँले रक्षामन्त्रीसमेत रहेका कार्यवाहक प्रधानमन्त्री पूर्णबहादुर खड्का, उपप्रधान तथा गृहमन्त्री नारायणकाजी श्रेष्ठ, शिक्षामन्त्री अशोक राई र स्वास्थ्य मन्त्री मोहन बस्नेतलाई छुट्टाछुट्टै फोन गरेर वार्तामार्फत आन्दोलनकारीका माग संबोधन गरी परिस्थिति सम्हाल्न निर्देशन दिनुभएको थियो। आन्दोलन भड्काएर प्रतिपक्ष सरकार ढाल्ने खेलमा लाग्नसक्ने भएरै प्रधानमन्त्रीले देशबाहिर रहेर पनि निरन्तर चासो दिएको र आन्दोलनकारीसँग सहमति गरिएको एक मन्त्रीले बताए।*

*अंकगणित निर्णायक हुने संसदीय राजनीतिमा विचार, सिद्धान्त, निष्ठा र आदर्श स्वतः कमजोर हुन्छ। सत्तामा पुग्न र टिकिराख्न राजनीतिक दलका नेताहरूले आफ्ना न्युनतम मूल्य, मान्यता र आदर्शहरूलाई कसरी लात मार्छन् भन्ने दृष्टान्त संसदीय राजनीतिमा अनेक छन्। संसदीय प्रणालीलाई आदर्श मान्ने कांग्रेसको कुरै छोडौं, 'संसद भनेको खसीको टाउको देखाएर कुकुरको मासु बेच्ने थलो हो' भन्ने लेनिनको कोटेसन कण्ठ गरेर राजनीतिमा लागेका कम्युनिष्ट नेताहरूसमेत विकृत संसदीय राजनीतिको हिस्सेदार हुँदा सरकार कतिसम्म अप्ठेरोमा पर्छ भन्ने ताजा दृष्टान्त पनि हो यो।*

**- साहस न्यौपाने**